# प्रधानमन्त्री केपी शर्मा ओलीको भारत भ्रमण

*by PahiloPost.com*



# भारत भ्रमणबारे प्रधानमन्त्री ओली : चिनियाँ कार्ड खेल्दिन

18th February 2016 | ६ फागुन २०७२ |

- **पहिलोपोस्ट-**

**काठमाडौं :** प्रधानमन्त्री केपी शर्मा ओलीले आशन्न भारत भ्रमणमा चिनियाँ कार्ड प्रयोग गर्नका लागि नभएको बताएका छन्। भोलि भारतको औपचारिक भ्रमणमा जान लागेका प्रधानमन्त्री ओलीले आज आयोजना गरेको पत्रकार सम्मेलनमा 'कसैको पक्ष वा विपक्षमा कुरा राख्नका लागि भ्रमण नभएको' बताए।

नयाँ संविधानसँगै सुरु भएको भारतीय अघोषित नाकाबन्दीपछि हुन लागेको भ्रमणमाथि प्रश्न गर्दै पत्रकारले सोधेका थिए, 'तपाइँ के भारतमा चीन कार्ड प्रयोग गर्नुहुन्छ?'

प्रत्युत्तरमा प्रम ओलीले भने, 'म कुनै कार्ड खेल्दिन।'

उनले कसैको पक्ष वा विपक्षमा आफू नलाग्ने प्रस्ट्याउँदै भने, 'म न जुवावाला हुँ न तासवाला।'

भारत भ्रमणको विषयमा उनले डिप्लोमेसीभन्दा बढी इमानमा र मित्रतामा विश्वास गर्ने बताए। भने, 'म परिस्कृत भाषामा होइन स्तरीय व्यवहारमा प्रस्तुत हुनुपर्ने मान्यता राख्छु।'

पत्रकारहरुको अर्को प्रश्न थियो : तपाईंको भारत भ्रमणमा कुनै अजेन्डा नै छैन। यो अजेन्डाविनाको भ्रमण हुँदैछ।

जवाफमा प्रम ओलीले भने, 'अजेन्डाविनाको भिजिट नै गह्रौं अजेन्डा हो।'

http://www.pahilopost.com/content/-13298.html

# नेपाल भारत सम्बन्धबारे प्रधानमन्त्रीका 'फन्नी' टिप्पणी

18th February 2016 | ६ फागुन २०७२ |

- **मनोज सत्याल/विनोद ढकाल-**

**काठमाडौं:** प्रधानमन्त्री केपी शर्मा ओलीले भारत भ्रमणमा जानु ठिक २४ घण्टाअघि त्यस भ्रमणबारे 'फन्नी' टिप्पणी गरेका छन्। सिंहदरबारस्थित आफ्नै कार्यलयमा आयोजत पत्रकार सम्मेलनमा प्रधानमन्त्री ओलीले भ्रमणको विषयमा जानकारी त गराए तर अजेण्डा र पछिल्लो राजनीतिक अवस्थाबारे रमाइला टिप्पणी गर्न भुलेनन्।

## यसरी प्रस्तुत भए प्रधानमन्त्री ओली

प्रधानमन्त्री ओलीले भारत भ्रमणमा आफूले मित्रता, सहअस्तित्व र पारस्परिक सहकार्यको भाव लिएर जान लागेको उल्लेख गरे। ' म खाली डोको लिएर डोकाभरी केही लिएर आउँछु भनेर जान लागेको होइन', ओलीले

भने।

भ्रमणका क्रममा हैदरावाद हाउसबाट भारतीय प्रधानमन्त्रीसँगै रिमोटबाट ढल्केबर मुजफ्फपुर प्रसारण लाइनको उद्घाटन गर्न लागेका ओलीले नेपालमा पानी धमिलिन्छ कि भन्ने भारतीय चिन्ता हटाउने आश्वासन व्यक्त गरे। 'भारतलाई नेपालले केही बिगारदिन्छ कि पानी धमिल्याएर तलतिर पठाउँछ कि भन्ने पिर छ। त्यो पिरमा हामी भन्ने छौं - यहाँ कुनै पानी धमिलिने छैन, पानी आनन्दले जस्तो छ त्यस्तै बग्न दिन्छौं, हिउँदमा सङ्गलो, बर्षामा धमिलो।'

प्रधानमन्त्री ओलीले आफ्नो भ्रमणबाट मुलुकलाई कुनै नोक्सान नहुने र लाभ नै प्राप्त हुने बताए। 'मित्रता प्राप्त गर्नु नै सबैभन्दा ठूलो लाभ हुन्छ। अरु कुराहरुको विषयका धेरै तयारी र दुरगामी सहमति र सम्झौता गर्न खोजिरहेका छैनौ। पहिले विश्वासको आधार निर्माण गर्नुपर्‍यो। अलिकति भत्किएको जग राम्रोसँग निर्माण गर्नुपर्‍यो', उनको भनाई थियो।




## कसैको पक्षमा कार्ड खेल्दैनौं

भारतले नाकाबन्दी लगाएपछि परराष्ट्र मन्त्री स्तरमा चीनसँग पेट्रोलियम व्यापारलाई दीर्घकालिन बनाउन प्रोत्साहन गर्ने लगायत आठ बुँदे समझदारी भएको थियो। साथै सरकारले चीनतिरका नाका सुचारु बनाउने लगायतका निर्णय गरेको थियो। तर भारत भ्रमण अघि प्रधानमन्त्री ओलीले आफूले कुनै चिनियाँ कार्ड नखेल्ने बताए।

'पहिलो कुरा त- हामी कसैको पक्षमा, कसैको विपक्षमा कार्ड खेल्दैनौं। त्यसमा पनि न म तासवाला हो न जुवावाला हो। यो कार्ड सार्डमा म विश्वास गर्दिन।'

'हाम्रा दुई वटा दुईतिरका छिमेकी छन्। भूगोल, विकास र जनसंख्याका आधारमा हामी भन्दा अगाडि छन्। हामी दुवैसँग मैत्रिपूर्ण सम्बन्ध कायम राख्न र बनाउन चाहान्छौं। पारस्परिक सद्भाव र लाभका आधारमा अगाडि बढ्न चाहान्छौं। कार्डको कुरा होइन', उनले अगाडि भने।
प्रधानमन्त्री ओलीले आफ्नो सरकारले डिप्लोमेसीलाई भन्दा व्यवहारमा विश्वास गर्ने बताए।

'यो सरकार डिप्लोमेसीमा होइन इमानमा विश्वास गर्छ, डिप्लोमेसीमा होइन मित्रतामा विश्वास गर्छ, यो

परिस्कृत भाषामा होइन, स्तरिय व्यवहारमा विश्वास गर्छ त्यसकारण यो त्यसैगरी प्रस्तुत हुन्छ। यसले कार्ड प्रयोग गर्ने भन्ने होइन। इमान्दारीका साथ मित्रतापूर्ण सम्बन्ध र एउटाका विरुद्ध अर्कोलाई र कसैका विरुद्ध कसैलाई पनि प्रयोग गर्दैन। देशका हितका निम्ति काम गर्छ', प्रधानमन्त्रीको ब्याख्या थियो।

## अजेण्डा विहीन भ्रमण झन् गह्रुङ्गो

प्रधानमन्त्री ओलीले आफ्नो भ्रमण अजेण्डाविहीन भएको स्वीकार गर्दै अजेण्डा नहुनु नै गह्रौं अजेण्डा भएको टिप्पणी गरे।

'म खाली डोको भिरेर डोकोभरी केहि ल्याउँ भनेर जान लागेको होइन। अजेण्डाविहीन भ्रमण हुनु नै सबैभन्दा गह्रङ्गो अजेण्डा हो। अहिलेको परिस्थिति भारी बोक्ने होइन। अहिलेको अवस्था त्यसभन्दा धेरै माथिको परिस्थिति हो। जटिलताले परिस्थितिलाई यस्तो बनाएको छ', प्रधानमन्त्रीको स्पष्टोक्ति थियो।




पत्रकारले सोधेको नेपाल भारतबीचका सीमा समस्या लगायतका प्रश्नमा ओलीले अहिले कुराकानी गर्ने समय नभएको बताए।

'नेपाल र भारत छिमेकी भएको हुनाले छिमेकीका समस्या त छिमेकी कै बीचमा हुने भए', उनले भने, 'सँगै सुतेपछि खुट्टा बोकायो, किन खुट्या बोकायो भनेपछि निन्द्रामै बोकाएछु भन्यो भने त सिद्धियो त। त्यसमा फेरि थपेर किन निदाएको थिइस् त भन्न पाँइदैन। हाम्रा बीचमा केही पेण्डिङ इस्यु छन्। पुराना समस्या होलान्। ती सबै समस्या अहिले समाधान गरिहाल्ने बेला होइन। यो बेला ती समस्या पनि समाधान हुने वातावरण निर्माणको दिशामा उन्नतस्तरको मत्रिता उन्नतत्त स्तरको समझदारीका प्रयासहरुका लागि व्यवहारिक ढंगले अनुकुल वातावरण मिलाउने बेला हो।'

## काँडो झिकेपछि पनि केही समय दुखिरहन्छ

प्रधानमन्त्री ओलीले भारतीय नाकाबन्दीलाई काँडासँग तुलना गरे। उनले नाका सहज भएपनि पेट्रोलियम अभाव भएको विषयमा सोधिएको प्रश्नमा छिट्टै समाधान हुने विश्वास गरे। भारतको रक्सौल नाकाबाट दैनिक रुपमा नेपालले २६ लाख लिटर पेट्रोलियम लोड गर्न भनेपनि भारतले १६ लाख लिटर मात्र लोड गरिरहेको छ। साथै राजधानी लगायतका कयौं स्थानमा पेट्रोलियम अभाव यथावत् रहेको छ।

'कस्तो हुन्छ भने काँडो बिझिहाल्यो भने निकालेपछि पनि अलिक समय दुख्छ। यो सायद त्यस्तै हो। यो धेरै लामो अवधि चाहिँ जाँदैन। यो सल्टिन्छ र अगाडि बढ्छ', प्रधानमन्त्रीले भने।

## के भारतले संविधानको स्वागत गर्छ?

नेपालको संविधान संवैधानिक रितको आवश्यकता भन्दा बढी ९२ प्रतिशतको साथमा लोकतान्त्रिक प्रक्रियाबाट जारी भएको संविधान भन्दै प्रधानमन्त्रीले संविधानको तारिफ गरे।

भारतले नेपालले आफ्नो सुझाव नमानी हतार हतारमा संविधान जारी गरेको आरोप लगाउँदै आएको छ। प्रधानमन्त्रीले ओलीले समय तोकेरै भोटिङ भएको र एक सातासम्म चलेको उदाहरण पत्रकार सम्मेलनमा दिन भुलेनन्।




संविधानको स्वागत भारतले गर्छ? भन्ने प्रश्नमा प्रधानमन्त्रीले भने – 'हामीले संशोधन गरेपछि संशोधनलाई भारतले स्वागत गरिसकेको छ।'

तर पत्रकारहरुले संशोधनपछि पनि भारतले पोजेटिभ भनेको तर स्वागत नगरेको प्रसङ्ग उठाएपछि उनले आफ्नो वाकपटुता प्रयोग गरे।

'अब मान्छेले श्रीमती पनि भन्न सक्छ, जहान पनि भन्न सक्छ र परिवार पनि भन्न सक्छ। शब्द के के हुन्छ यसको पछाडि पनि जानु हुँदैन। श्रीमानलाई लोग्ने भनेपछि हुन्छ अझ घरका  मात्र पनि भन्ने चलन छ। कतिपयले हाम्रा बाहुन पनि भन्छन्', प्रधानमन्त्रीले उदाहरण दिँदै भने, 'संविधानबाट निर्वाचित प्रधानमन्त्रीलाई राजकीय भ्रमणमा आमन्त्रण गरेपछि संविधानलाई मान्यता दिएको नदिएको प्रश्न फेरि बाँकी रहन्छ र? के सोध्न जाने संविधानलाई मान्यता दिएको नदिएको?'

उनले अब नेपाल र भारतबीचको सम्बन्धमा असझदारी सुल्टिसकेको दावी गर्दै फेसो छ भनेपछि ठोक्नेभन्दा पनि परिस्थितिलाई सहजता तर्फ लैजानुपर्ने आवश्यकता औंल्याए।

'तपाँइ गएर के चाहिँ गर्नुहुन्छ र सम्बन्ध सामान्यीकरण हुन्छ?', भन्ने पत्रकारको प्रश्नमा ओलीले जवाफ फर्काए  'म भारतलाई उहीँ छाडेर नेपाल आउँछु, म मित्रता मात्रै बोकेर आउँछु।'

उनले आफूलाई भारतले मित्रताकै निम्तो बोलाएको दावी समेत गर्न भुलेनन्।




http://www.pahilopost.com/content/-13304.html

# संविधानका बाँकी विषय टुङ्गिने दिल्लीको आशा, भारतले पहिलो पटक प्रयोग गर्‍यो ब्लकेड शब्द

18th February 2016 | ६ फागुन २०७२ |



- **उमेश श्रेष्ठ -**

**नयाँ दिल्ली :** प्रधानमन्त्री केपी शर्मा ओलीको भ्रमणको पूर्वसन्ध्यामा भारतले संविधान संशोधनलाई सकारात्मक भन्दै बाँकी विषयमा सकारात्मक चर्चा हुने आशा व्यक्त गरेको छ।

सीमाङ्कन लगायतका विषयलाई तीन महिनाभित्र टुङ्ग्याउने गरी राजनीतिक संयन्त्र गठनको रस्साकस्सी काठमाडौँमा चलिरहेका बेला दिल्लीले यस्तो सन्देश दिएको हो।

के नागरिकता लगायतका विषयमा दिल्ली प्रधानमन्त्री ओलीसँग आफ्नो चासो राख्नेछ त? भन्ने प्रश्नमा नयाँ दिल्लीस्थित विदेश मन्त्रालयमा आयोजित नियमित पत्रकार भेटघाटमा प्रवक्ता विकास स्वरुपले भने, 'यो इस्यु मधेसीले पहिलेदेखि उठाउँदै आएकोछ यसमा नेपाल सरकारसँग वार्ता भइरहेको छ।'

'हाम्रो अपेक्षा यही छ कि जुन किसिमले दुई वटा संशोधन संविधानको पास भएको छ जसलाई हामीले सकारात्मक कदमको संज्ञा दिएका थियौं, त्यसैगरी त्यस्तै सकारात्मक दिशामा बाँकी मुद्दामा सकारात्मक चर्चा हुनेछ र छिट्टै नै हल निस्कनेछ', उनले भने।

## भारतले पहिलो पटक प्रयोग गर्‍यो 'ब्लकेड' शब्द

नेपालमा पेट्रोलियम पदार्थ विशेष गरी ग्यासको आपूर्ति अझै सहज हुन नसकेको विषयमा सोधिएको प्रश्नलाई उनले अस्वीकार गरे। उनले भने, 'यो मेरो जानकारीमा छैन।'

उनले बुधबारको तथ्याङ्क पत्रकार सम्मेलनमा पेश गर्दै विभिन्न नाकाबाट भित्रिएका गाडीको संख्या सुनाए तर त्यसमध्ये कति पेट्रोलियम पदार्थ र ग्यासको हो चाहिँ बताएनन्।

नाकाबन्दी (ब्लकेड) शब्दलाई बारम्बार इन्कार गर्दै आएका प्रवक्ताले पत्रकार सम्मेलनमा भने 'ब्लकेड' शब्द नै प्रयोग गर्दै भने, 'यी तथ्याङ्कका आधारमा हामी भन्न सक्छौँ, आपूर्ति ब्लकेडभन्दा पहिलाकै लेभलमा आइसकेको छ।'

यसअघि दिल्लीले कुनै पनि अफिसियल वा ननअफिसियल ब्लकेड नभएको दावी गर्दै आएको थियो।




## के विषयमा छलफल?

प्रधानमन्त्री ओलीको भारत भ्रमणका क्रममा आपसी चासोका सबै विषयमा छलफल हुने उनले बताए।

द्विपक्षीय सहयोगमा मुख्य गरी ऊर्जा, कनेक्टिभिटी र दुई देशका जनताबीचको सम्बन्धका बारेमा छलफल केन्द्रित रहने उनले बताए।

# भारतमा यसरी बित्नेछ प्रधानमन्त्री ओलीको ६ दिन

18th February 2016 | ६ फागुन २०७२ |



- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली :** प्रधानमन्त्री केपी शर्मा ओली भोलि भारतको ६ दिने औपचारिक भ्रमणका लागि आउँदैछन्। उनी चार बजे दिल्ली उत्रनेछन् भने बुधबार मुम्बईबाट स्वदेश फर्कनेछन्। भारतीय प्रधानमन्त्रीदेखि राष्ट्रपति अनि उद्योगी व्यवसायीसँग भेट गर्न लागेका ओलीले ६ दिन के के गर्दैछन् त? भारतीय विदेश मन्त्रालयका प्रवक्ता विकास स्वरुपले बिहीबार प्रेस सम्मेलनमा यसको घोषणा गरे। यस्तो छ उनको कार्यक्रम -

**पहिलो दिन शुक्रबार**

- दिउसो साढे ४ बजे दिल्ली आइपुग्ने
- साँझ नेपाली दूतावासको आयोजनामा प्रजातन्त्र दिवसको उपलक्ष्यमा आयोजित कार्यक्रममा सहभागी हुने। कार्यक्रममा ५ सयभन्दा बढीलाई आमन्त्रण गरिएको छ।

**दोश्रो दिन शनिबार**

- बिहान १० बजे राष्ट्रपति भवनमा औपचारिक स्वागत।
- साढे १० बजे राजघाटमा पुष्पअर्पण।
- ११ बजे राष्ट्रपति भवनमा विदेश मन्त्री शुस्मा स्वराजसँग भेट।
- १२ बजे हैदराबाद हाउस भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीसँग भेट।
- १ बजे हैदराबाद हाउसमा सम्झौताहरुको हस्तान्तरण।
- ४ बजे राष्ट्रपति भवनमा भारतीय गृहमन्त्री राजनाथ सिंहसँग भेटघाट।
- ४ बजेर ४५ मिनेटमा राष्ट्रपति भवनमा भारतीय वित्तमन्त्री अरुण जेट्लीसँग भेट।
- साढे ५ बजे मौलाना आजाद रोडमा भारतका उपराष्ट्रपतिसँग भेट।

- ७ बजे राष्ट्रपति भवनमा भारतका राष्ट्रपतिसँग भेट

**तेश्रो दिन आइतबार**

- बिहान ९ बजे देहरादुन जाने
- साढे १० बजे तेहरी हाइड्रो पावर प्रोजेक्ट भ्रमण।
- १ बजेर ५० मिनेट दिल्ली फिर्ता।
- साढे तीन बजे राष्ट्रपति भवनमा भारतीय नेताहरुसँग भेटघाट।

**चौथो दिन सोमबार**

- साढे ९ बजे राष्ट्रपति भ्रमणमा भारतीय उर्जा राज्यमन्त्री पियुष गोयलसँग भेटघाट
- ११ बजे इन्डियन काउन्सिल फर वर्ल्ड अफेयरमा ओलीको सम्बोधन।
- ६ बजे होटेल ताज प्यालेसमा बिजनेस मिटिङ।

**पाँचौ दिन मंगलबार**

- साढे ७ बजे गुजरातको भुज भ्रमण (भूकम्पपछिको पुनर्निर्माण अवलोकन)
- ९ बजेर ४५ मिनेट होटेल रिजेन्टा रिसोर्टमा गुजरात सरकारको प्रस्तुति।
- साढे ११ बजे भिमासार पुनर्वास क्षेत्रको भ्रमण र स्थानीयबासीसँग छलफल।
- १ बजेर १५ मिनेटमा मुन्द्रा पुनर्वास क्षेत्र र जिके अस्पतालको भ्रमण।
- ४ बजे मुम्बइ प्रस्थान
- साढे ७ बजे राज भवनमा महाराष्ट्रका गभर्नरसँग भेटघाट।

**छैठौँ दिन बुधबार**

- मुम्बईबाट साँझ ५ बजे स्वदेश फिर्ता।

http://www.pahilopost.com/content/-13307.html

# राजनीतिक संयन्त्र गठन अनुमोदन गर्न राति क्याबिनेट

18th February 2016 | ६ फागुन २०७२ |

काठमाडौं : सरकार समर्थक दलहरुको 'उच्चस्तरीय राजनीतिक समिति'को आज राति बसेको बैठकले सीमाङ्कनमा देखिएको विवाद समाधान गर्न राजनीतिक संयन्त्र गठन गर्ने निर्णय गरेको छ।

बैठकपछि समितिका संयोजक पुष्पकमल दाहालले मधेसकेन्द्रित दलका नेताहरुको चाहना र भावना बमोजिम उनीहरुलाई पनि समावेश गरी संयन्त्र बनाइने जानकारी दिए। सो निर्णयलाई अनुमोदन गर्न मन्त्रिपरिषद् बैठक अहिले जारी छ। रासस

http://pahilopost.com/content/-13311.html

# भारत भ्रमणपूर्व एकतर्फीरुपमा सीमाङ्कन मिलाउने संयन्त्र रातारात गठन

18th February 2016 | ६ फागुन २०७२ |

**काठमाडौं** : उपप्रधान तथा परराष्ट्र मन्त्री कमल थापाको नेतृत्वमा सीमाङ्कनमा देखिएको विवाद समाधान गर्न राजनीतिक संयन्त्र गठन भएको छ। संयन्त्रमा ११ सदस्य रहेका छन्। भारत भ्रमणको अघिल्लो राति बसेको मन्त्रिपरिषदको बैठकले संयन्त्र गठन गर्ने निर्णयलाई अनुमोदन गरेको हो।

आज साँझ प्रमुख दल र आन्दोलनमा रहेका मधेसी मोर्चाबीच संयन्त्र गठनको विषयमा छलफलका श्रृंखलाहरु चले पनि ठोस निर्णयमा पुग्न सकेन। सीमाङ्कनको समस्या सुल्ट्याउनुभन्दा भारत भ्रमण सहज बनाउने सरकारी प्रयास भएको आरोप लगाउँदै मधेसी लोकतान्त्रिक मोर्चा आवद्ध दलका नेताले आफ्ना असहमति कायमै राखेका थिए।

छलफल कुनै निर्णायक मोडमा पुग्न नसकेपछि एकतर्फीरुपमा संयन्त्र गठन भएको हो।

सरकार समर्थक दलहरुको 'उच्चस्तरीय राजनीतिक समिति'को आज राति बसेको बैठकले सीमाङ्कनमा देखिएको विवाद समाधान गर्न राजनीतिक संयन्त्र गठन गर्ने निर्णय गरेको थियो।
बैठकपछि समितिका संयोजक पुष्पकमल दाहालले मधेसकेन्द्रित दलका नेताहरुको चाहना र भावना बमोजिम उनीहरुलाई पनि समावेश गरी संयन्त्र बनाइने जानकारी दिएका थिए।

# दिल्लीस्थित नेपाली दूतावासबाहिर यसकारण भयो लाठिचार्ज हुने गरी झडप

18th February 2016 | ६ फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली** : बिहीबार दिउँसो बाह्रखम्बा रोडस्थित नेपाली दूतावास जान खोज्दा प्रहरी र प्रदर्शनकारीको भिड छिचोल्नै मुश्किल थियो। दिल्ली प्रहरी घेरा हालेर तम्तयार बसेको थियो। ब्यानर र प्लेकार्डहरुसहित प्रदर्शनकारीहरु घाँटी सुक्ने गरी नारा लगाउँदै थिए- 'आ...वाज दो, हम ए...क हैं'

नेपाली दूतावास बाहिर भइरहेको प्रदर्शन भए पनि यो प्रदर्शनसँग नेपाल र नेपालको राजनीतिसँग गोरु बेचेको साइनो पनि छैन। यो त राज्यद्रोहको अभियोगमा भारतको जवहरलाल नेहरु विश्वविद्यालयका एक विद्यार्थीलाई पक्राउ गरिएपछि तातिएको भारतीय राजनीति हो। थप जानकारी यहाँ छ। भारतीयदेखि अन्तर्राष्ट्रिय मिडियाहरु समेत यहाँबाट अन द स्पट कभरेज दिइरहेका थिए।

घोक्रो सुकाउँदै नारा लगाइरहेका प्रदर्शनकारीहरुलाई ब्याकग्राउन्डमा राख्दै टेलिभिजन संवाददाताहरु 'पिटिसी' दिनमा व्यस्त थिए। केही प्रदर्शनकारीहरु 'कोट' दिनमा व्यस्त थिए।

नेपाली दूतावासका कर्मचारीहरु भने बेग्लै चिन्तामा थिए। भोलि पनि यस्तै प्रदर्शन भयो भने प्रधानमन्त्री ओलीलाई अप्ठेरो पो हुने भो त।

दूतावासका कर्मचारीहरुको चिन्ता सुनेर विदेश मन्त्रालयको प्रेस ब्रिफिङमा लागेको केही समयमै खबर आयो, दूतावास नजिकै झडप पो भएछ। प्रहरीले लाठिचार्ज गर्नुपर्‍यो।

कम्युनिस्ट पार्टीको भ्रातृ संगठन अल इन्डिया स्टुडेन्ट्स फेडेरेसन र अखिल भारतीय विद्यार्थी परिषद्का विद्यार्थीहरु जेएनयु विद्यार्थी युनियनका सभापति कन्हैया कुमारको गिरफ्तारीको विरोधमा निकालेको जुलुस नेपाली दूतावासबाहिर बाह्रखम्बा रोड नजिकै रहेको भारतीय जनता पार्टीनजिकै पुगेर पार्टी विरोधी नारा लगाउने बित्तिकै झडप सुरु भएको थियो।

प्रहरीले स्थितिलाई नियन्त्रणमा लिन लाठीचार्ज गर्नुपरेको बतायो।




# भारत भ्रमणअघि पनि मागभन्दा ६० प्रतिशत कम इन्धन दिँदै आइओसी

18th February 2016 | ६ फागुन २०७२ |

- **सविन मिश्र-**

**काठमाडौं :** नाकाबन्दी पूर्ण नखुले भारत भ्रमण नगर्ने बताएका प्रधानमन्त्री केपी शर्मा ओली भोलि दिल्ली जाँदैछन्। तर पनि भारतीय पक्षले नेपालमाथि इन्धन निर्यातलाई पूर्ण सहज बनाइसकेको छैन। वीरगञ्ज नाका खुलेको तीन साता हुन लाग्दासमेत इन्डियन आइल कर्पोरेसन (आइओसी)ले नेपालले मागेअनुसार तेल नदिएको हो। निगमले रक्सौलबाट दैनिक २६ सय किलोलिटर (२६ लाख लिटर) तेल लोडिङ मागेको भए पनि आइओसीले दैनिक १६ सय केएल (१६ लाख लिटर) मात्रै तेल दिएको हो।

'हामीले मागेजति तेल उनीहरुले दिएका छैनन्, दैनिक २६ सय केएल मागेका थियौं तर १६ सय केएल मात्रै लोडिङ भइरहेको छ,' आयल निगमका प्रवक्ता मुकुन्द घिमिरेले भने, 'उनीहरुले बढाउने कुरा त पहिलेदेखि नै गरेका हुन् तर अझै दिएका छैनन्।'

निगमले आइओसीसँग वीरगञ्ज नाका खुल्ने बित्तिकै पर्याप्त तेल दिन भनेको थियो। तर अहिलेसम्म आइओसीले लोडिङ परिमाण बढाएको छैन। 'उनीहरुलाई सुरुदेखि नै हाम्रो आवश्यकता अनुसारको तेल दिन

आग्रह गरेका थियौं,' घिमिरेले भने, 'तर अहिलेसम्म परिमाण बढाएका छैनन्।'

भारतबाट मागेजति तेल नआएपछि निगमले अहिले कोटा तोकेर तेल वितरण गरिरहेको छ। अघिल्लो सातादेखि नै सबै पम्पलाई तेल दिने भने पनि निगमले निश्चित पम्पलाई तोकेर तेल दिँदै आएको छ। निगमले सबै पम्पलाई आवश्यकता अनुसार तेल उपलब्ध गराउन नसकेपछि बजारमा अझै पेट्रोलियम पदार्थको सहज आपूर्ति हुन सकेको छैन।

नेपाल आयल निगमको अमलेखगञ्ज डिपो प्रमुख भानुभक्त खनालले नेपालको आवश्यकताको ४० देखि ५० प्रतिशत मात्रै तेल लोडिङ भइरहेको जानकारी दिए। '१४ सयदेखि १७ सय केएलसम्म तेल दिएका छन्, यो हाम्रो आवश्यकताको ५० प्रतिशत भन्दा कम हो,' उनले भने, 'यसमा हवाई इन्धन जोडिएको छैन। पेट्रोल र डिजेल मात्रै कम परिमाणमा दिइरहेका हुन्।'

भारतबाट ग्यास पनि पर्याप्त लोडिङ भएको छैन। अहिले दैनिक ३० बुलेटको हाराहारीमा ग्यास लोड भइरहेको खनालले जानकारी दिए।

### नाकाबन्दी खुलेपछि दु:ख धेरै

आयल निगम स्रोत अनुसार भारतले लगाएको नाकाबन्दी हटेपछि आइओसीका अधिकारीले नेपालबाट गएका ट्यांकर चालक र नेपाली अधिकारीलाई अनावश्यक दु:ख दिन थालेका छन्। उनीहरुले सुरक्षा चुनौति बढेको भन्दै नेपालबाट जाने चालक तथा अन्य अधिकारीसँग पहिलेभन्दा धेरै केरकार गर्ने र कागजात माग्न थालेका छन्।

'कहिले नागरिकता त कहिले के भनेर हामीलाई अनावश्यक दु:ख दिइरहेका छन्,' निगमका एक अधिकारीले भने, 'पहिले यस्तो थिएन, सेक्युरिटी थ्रेट बढ्यो भन्दै उनीहरुले हामीलाई हयासल्स थपेका छन्।'

# विशेष विमानमा आएका मोदीका 'दूत' स्वामी : जसले हतारहतार प्रधानमन्त्री र प्रचण्ड भेटे अनि फर्किए

18th February 2016 | ६ फागुन २०७२ |

- **पहिलोपोस्ट-**

**काठमाडौं :** प्रधानमन्त्री केपी शर्मा ओलीको भारत भ्रमणको एक दिन अघि भारतीय प्रधानमन्त्रीको विशेष दूतका रुपमा नेपाल आएका सुब्रमण्यम स्वामीले विहीबार उच्च राजनीतिक भेट गरेका छन्। स्वामी पूर्व मन्त्री हुन् भने तमिलनाडुबाट प्रतिनिधित्व गर्ने भाजपाका नेता हुन्।

चीन, पाकिस्तान र इजरायलबारे लेखेका स्वामी भारतीय उच्च कुटनीतिज्ञ समेत हुन्। उनले इकोनोमिक्समा हावर्डबाट पिएचडि समेत गरेका छन्।



गुजरात सरकारको विमानबाट काठमाडौँ उत्रिएका स्वामीले मोदीको दूतको रुपमा प्रधानमन्त्री केपी शर्मा ओली र एमाओवादी अध्यक्ष प्रचण्ड लगायतसँग छलफल गरेका थिए।

द हिन्दुले स्वामीलाई उच्च प्रोटोकल अनुसार भ्रमणमा पठाइएको भएपनि 'अनअफिसियल' राख्न खोजिएको लेखेको छ। स्वामीले पनि आफ्नो ट्विटमा लेखेका छन् – 'नेपालले दिएको सम्मानका आधारमा मिडियाले विशेष दूतको रुपमा मलाइ अर्थ्याएको छ। प्रधानमन्त्री नरेन्द्र मोदी र मेरोबीचमा नेपालका विषयमा प्रत्यक्ष कुनै कुराकानी भएको छैन।'

*@KRAVI1977 : There was no direct talk between Namo and me on Nepal. Media is assuming this because the reception that Nepalese gave me.*

*— Subramanian Swamy (@Swamy39) February 19, 2016*

प्रधानमन्त्री केपी शर्मा ओलीले भने स्वामीसँग भएको भेटबारे बिहीबारको पत्रकार सम्मेलनमा केही बताएनन्। पत्रकारको जिज्ञासामा उनले 'भेट भयो' भन्ने जवाफ मात्र दिएका थिए।

स्वामीसँग भेटमा आएका जगदिश सेट्टीले ट्विटमा लेखेका छन् – यो स्वामीको एकदमै व्यस्त दिन रह्यो, नेपाली प्रधानमन्त्री र प्रचण्ड लगायत अन्य नेताहरुसँग भेट भयो।

*DR [@Swamy39](#) IN Kathmandu on a day visit to talk with Nepali leaders with Ex PM Prachanda & others [pic.twitter.com/rqFVJ3nJP8](#)*

*— Jagdish Shetty (@jagdishshetty) [February 18, 2016](#)*
स्वामीले नेपाल र भारतबीचको पछिल्लो तनावपूर्ण अवस्था अन्त्य गर्ने विषयमा नेपालमा छलफल गरेको [भारतीय अनलाइन डिएनए](#)मा समाचार प्रकाशित छ। डिएनएले स्वामीले मोदीको म्यासेजका रुपमा 'एन्टि हिन्दु फोर्स' सँग बच्न र चीन तर्फ इङ्गित गर्दै भारत बाहेकसँग गठबन्धन विस्तारको विषयमा सचेत रहन भनेको लेखेको छ।

विहिबार मध्यान्न काठमाडौं आएर उनि विहीबार साँझै फर्किएका हुन्।

# प्रम ओली आजदेखि भारत भ्रमणमा, के लेखे आज भारतीय मिडियाले?

19th February 2016 | ७ फागुन २०७२ |

- **उमेश श्रेष्ठ -**

**नयाँ दिल्ली :** प्रधानमन्त्री केपी ओलीले ६ दिने औपचारिक भ्रमण गर्ने दिनलाई यहाँका पत्रपत्रिकाले खासै महत्व दिएका छैनन्। दिल्लीबाट आज बिहान निस्किएका अधिकांश पत्रिकाहरुमा जेएनयु विवाद नै मुख्य समाचारका रुपमा रहेको छ।

कतिपय पत्रिकाले आजदेखि हुन लागेको भ्रमणबारे उल्लेख गर्नसमेत जरुरी ठानेका छैनन्।

द हिन्दुको विचार पृष्ठमा आज नेपाली पत्रकार कनकमणि दीक्षितको लेखलाई प्राथमिकताका साथ छापिएको छ। 'लिमिट्स टु इन्डियन एक्सेप्सनलिजम' शीर्षकमा दीक्षितले लेखेको लेखको हाइलाइट्समा राखिएको छ- 'केपी शर्मा ओलीले उहिलेका कुरा खुइलिएर गए भन्दै अन्तर्राष्ट्रिय कानुन, पञ्चशील र असल छिमेकीपनाको उल्लङ्घन हुने गरी गरिएको नाकाबन्दीका बारेमा उल्लेख नगर्न सक्छन्। तर यदि नेपाललाई सार्वभौम रुपमा पुनिर्माण गर्न दिए मात्रै पनि गल्ती सुधारतर्फको ठूलो कदम हुनेछ।'

लेखको अर्को हाइटलाइटस् तानिएको छ- 'नयाँ दिल्ली एकपक्षी रुपमा काम गर्न चाहन्छ र नेपाल भारतको भुटानदेखि बंगलादेश र श्रीलंकासम्मको एडभेन्चरिजमको दौडमा अन्तिम देश भइरहेको छ। नेपालको सार्वभौम स्टायटसलाई बिस्तारै धुमिल पार्ने प्रयासभन्दा यसको सम्मान गर्नु भारतकै हितका लागि उपयुक्त हुनेछ।'

उनले नयाँ दिल्लीका थिङ्कट्याङ्क र ओपिनियन मेकरहरुले संविधानै नपढी यसको आलोचना गरेको आरोपसमेत लगाएका छन्।
हिन्दुस्तान टाइम्सको २१ औं पृष्ठमा प्रधानमन्त्री केपी ओलीले हिजो गरेको पत्रकार सम्मेलनको समाचार छापिएको छ। 'म कार्ड खेल्ने जुवाडे हैन, त्यसैले कार्ड खेल्नेमा म विश्वास गर्दिनँ' भन्ने प्रमको भनाईलाई समाचारमा हाइटलाइट्स तानिएको छ।

इन्डियन एक्सप्रेसले युवराज घिमिरेको बाइलाइनमा सातौं पृष्ठमा प्रम ओलीको त्यही पत्रकार सम्मेलनको

समाचार छापेको छ जसको शीर्षक राखिएको छ- भारतसँग मित्रता फेरि बनाउन (रिबिल्ड) चाहन्छु। सबहेडलाइनमा छ- 'नेपालका प्रम ओली आजदेखि ६ दिने भ्रमण सुरु गर्दैछन्, ४६ सदस्यीय प्रतिनिधिमण्डलको नेतृत्व गर्नेछन्।'

नेपालबारे इन्डियन एक्सप्रेसले अर्को समाचार पनि छापेको छ, पूर्वराजा ज्ञानेन्द्रको। ज्ञानेन्द्र शाहले प्रजातन्त्र दिवसको अवसरमा दिएको सन्देशलाई भित्री पृष्ठमा फोटोसहित समाचार छापिएको छ।

हिन्दी भाषाका पत्रिका मध्ये जागरणले २४ औँ पृष्ठमा 'साढे चार वर्षपछि नेपालका प्रधानमन्त्रीको आधिकारिक यात्रा आज, भारतीयहरुको नागरिकताको मुद्दा उठ्नेछ' शीर्षकमा समाचार छापेको छ।

भारतका घोर विरोधी मानिने ओलीले आफ्नो पहिलो विदेश यात्राका रुपमा भारतलाई चयन गर्नुले छिमेकी देश नेपालका लागि भारत निकै महत्त्वपूर्ण छ भन्ने देखाएको पत्रिकाको टिप्पणी छ।

पत्रिकाले स्रोतलाई उद्धृत गर्दै भारतले दुई वटा जलविद्युत आयोजनामा सहयोग गर्ने घोषणा गर्ने उल्लेख गरेको छ।

# प्रम ओलीको स्वागत गर्न आतुर छ दिल्ली दूतावास, हेर्नुस् फोटोमा बाह्रखम्बा रोडमा तयारी

19th February 2016 | ७ फागुन २०७२ |

- **उमेश श्रेष्ठ -**

**नयाँ दिल्ली :** पाँच वर्षपछि नेपाली प्रधानमन्त्रीको पहिलो औपचारिक भ्रमण। बाह्रखम्बा रोडस्थित झण्डै ५० रोपनीमा फैलिएको नेपाली दूतावासको चटारो बेग्लै छ।

'सन् २०११ मा बाबुराम भट्टराईको भ्रमणपछि पहिलो पटक नेपाली प्रधानमन्त्रीको स्टेट भिजिट हुन लागेको हो,' भारतीय विदेश मन्त्रालयका प्रवक्ता विकास स्वरुप बिहीबार साँझको प्रेस ब्रिफिङमा बताउँदै थिए।

त्यसैले पनि दूतावासका कर्मचारीहरु बेग्लै किसिमको हतारोमा छन्। गर्नुपर्ने काम धेरै छन् तर समय थोरै छ। शुक्रबारदेखि प्रधानमन्त्री केपी शर्मा ओलीको स्टेट भिजिटको तयारी गर्नुछ।

नेपाली दूतावासका कर्मचारीहरु निरन्तर एमइए (भारतीय विदेश मन्त्रालयको संक्षिप्त रुप) का अधिकारीहरुसँग सम्पर्कमा छन्। भ्रमण दलका सदस्यहरुको नाम थपिने क्रम जारी छ। यसले पनि उनीहरुलाई अप्ठेरो बनाइरहेकै छ।

'भोलि हिन्दुले पीएमज्युको इन्टरभ्यु गर्न चाहेको छ के गर्ने होला?' दूतावासका कर्मचारी महामहिम (राजदूत दीपकुमार उपाध्याय) लाई ब्रिफिङ गर्छन्। यस्ता सब विषय टुङ्गो लगाउने अन्तिम निर्णय उनकै काँधमा छ।

'सिइओ लेभलभन्दा मुनिकालाई इन्भाइट गर्ने होइन', व्यापारिक समुदायसँग प्रधानमन्त्री ओलीको भेटबारे उनी निर्देशन दिँदै थिए। भ्रमणलाई सकेसम्म प्रभावकारी बनाउनेतर्फ उनी ज्यादै सक्रिय देखिए।

दूतावासलाई भोलिको बेग्लै चटारो पनि छ। भोलि फागुन ७ गते पहिलो पटक प्रधानमन्त्री देश बाहिरको कार्यक्रममा उपस्थित हुँदैछन्।
अरु बेला भए प्रजातन्त्र दिवसको दिन दूतावासले एउटा सामान्य कार्यक्रम गर्ने थियो। तर भोलि प्रधानमन्त्रीको उपस्थितिमा एउटा भव्य कार्यक्रम हुनेछ। यो कार्यक्रमका लागि यहाँका सयभन्दा बढी डिप्लोमेटिक मिसनलाई निमन्त्रणा बाँडिसकिएको छ। ती सहित पाहुना मात्रै ६ सय जना हुने अनुमान छ।

यसका लागि बिहीबार रातो कार्पेटदेखि टेबल कुर्सीसम्मको एरेन्जमेन्टमा व्यस्त थियो दूतावास परिसर।

हेर्नुस् दूतावास परिसरका केही फोटो-





दूतावासभित्रको दृश्य।





राजदूत दीपकुमार उपाध्याय कार्यकक्ष प्रवेश गर्ने क्रममा

# प्रधानमन्त्रीसँग कांग्रेस र मधेसी मोर्चा दिल्ली नजाने

19th February 2016 | ७ फागुन २०७२ |

- **पहिलोपोस्ट**

**काठमाडौं :** आजदेखि हुन लागेको प्रधानमन्त्री केपी शर्मा ओलीको भारत भ्रमण टोलीमा प्रतिपक्षी नेपाली कांग्रेस र तराईमा आन्दोलनरत संयुक्त लोकतान्त्रिक मधेसी मोर्चाका कोही पनि नेता सहभागी नहुने भएका छन्।

भ्रमण टोलीका सदस्यबारे भारतमा रहेको नेपाली दूतावासले दिएको प्रारम्भिक नामावलीमा कांग्रेस नेतृ सुजाता कोइराला र पूर्णबहादुर खड्का, मोर्चाको घटक संघीय समाजवादी फोरमका शिवजी यादव र संघीय सद्भावना पार्टीकी डिम्पलकुमारी झाले दिल्ली नजाने बताएका छन्।

कांग्रेस नेतृ सुजाता कोइरालाले दिल्ली जाने विमानको टिकट क्यान्सिल गर्न लगाएकी उनको सचिवालयले जनाएको छ। कांग्रेसका अर्का सभासद पूर्णबहादुर खड्काले पनि बिहीबार साँझ दिल्ली भ्रमण क्यान्सिल गरेका छन्। फागुन ११ गते पर्ने पार्टीको केन्द्रीय समितिको बैठकका कारण दिल्ली भ्रमण क्यान्सिल गर्नुपरेको उनले बताए।

'म अरु कारणले दिल्ली नगएको होइन, १३ औं महाधिवेशनको मुखमा आयोजित केन्द्रीय समितिको बैठकमा विधान संशोधन लगायत महत्वपूर्ण विषयमा छलफल हुन लागेको र यसको तयारी पनि गर्नुपर्ने भएकाले प्रधानमन्त्री ज्यूलाई रिक्वेस्ट गरेर क्यान्सिल गरेको हुँ' उनले भने। खड्काले दिल्ली भ्रमण क्यान्सिल गर्नुको अरु कुनै उद्धेश्य नभएको प्रष्ट्याए। 'मलाइ नेताहरुले पनि जानुस् नै भन्नुभएको थियो, यो महत्वपूर्ण मिटिङ भएकाले मैले नै क्यान्सिल गरेको हुँ' उनले भने।

संघीय समाजवादी फोरमका सभासद शिवजी यादवले मधेसी मोर्चाको निर्णय अनुसार आफु दिल्ली भ्रमणमा नजाने बताए। 'भ्रमण टोलीमा मेरो नाम त छ तर मोर्चाको तर्फबाट भ्रमणमा सहभागी नहुने कुरा भएकाले हामी जाँदैनौं' उनले पहिलोपोस्टसँग भने।

संयुक्त लोकतान्त्रिक मधेसी मोर्चामा नरहेको अनिल झा नेतृत्वको संघीय सद्भावना पार्टीकी सभासद डिम्पलकुमारी झाले पनि आफु प्रधानमन्त्री ओलीको टोलीमा दिल्ली नजाने बताएकी छन्। केन्द्रीय कमिटी बैठकका लागि जनकपुरमा रहेकी उनले पहिलोपोस्टसँग टेलिफोनमा भनिन् 'मलाई भ्रमण टोलीमा राखेकोबारे केही थाहा छैन, तर म दिल्ली जाँदै छैन।'

प्रधानमन्त्री ओलीको भारत भ्रमण टोलीमा मन्त्रीहरु बाहेक १६ जना सभासदको नाम राखिएको छ। जसमा एमालेका लालबाबु यादव, राजन भट्टराई, एकीकृत नेकपा माओवादीका हितराज पाण्डे, शिवकुमार मण्डल केवट, मधेसी जनाधिकार फोरम लोकतान्त्रिकका जितेन्द्र देव, नेकपा मालेका अइन्द्र सुन्दर नेम्वाङ लगायत रहेका छन्।

# ओलीलाई हतारमा संयन्त्र गठनको आवश्यकता किन पऱ्यो?

19th February 2016 | ७ फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली :** प्रधानमन्त्री केपी ओली भारत भ्रमणमा जान २४ घण्टाभन्दा पनि कम समय बाँकी रहेको बेला बिहीबार रातीको मन्त्रिपरिषद् बैठकले एकपक्षीय रुपमा राजनीतिक संयन्त्र गठन गर्ने निर्णय गऱ्यो। आन्दोलनरत मधेसी मोर्चाको सहमति बिना यसरी हतारमा संयन्त्र गठनको आवश्यकता किन पऱ्यो त?

किनभने ओलीलाई राम्रैसँग थाहा छ, उनले दिल्लीलाई जे गर्छु भनेर वचन दिएका छन्, त्यसलाई कार्यान्वयन भएको देखाउनुछ। भारत भ्रमणको बेलै यो देखाउन जरुरी पनि थियो। तर मधेसी मोर्चाको सहमति बिना बनेको संयन्त्रले समस्या समाधान गर्ला?

के काठमाडौं मधेसलाई बाइपास गर्दै दिल्लीतिर नजिकिन खोजेको हो? ओली भ्रमणको पूर्वसन्ध्यामा इन्डिया इन्टरनेसनल सेन्टर (आइआइसी) मा पहिलोपोस्टसँग कुरा गर्दै नेपाल मामिलाका जानकारका रुपमा परिचित प्राध्यापक एसडी मुनिले भने 'कुरा संयन्त्रको होइन, कुरा समस्या समाधानको हो।'



मधेसी दलको चित्त बुझ्ने गरी संयन्त्र बनाएर समस्या समाधानमा अघि बढे मात्र दुई देशको सम्बन्ध साँच्चिकै सहज हुनेछ। नत्र के होला? मुनिकै भाषामा त्यो अहिले भन्न सकिन्न, 'होला, यता दिल्लीमा औपचारिक स्वागतका कुरा देखावटी रुपमा जारी नै रहला तर कुरा मिल्ने छैन।'

उनका अनुसार तीन महिनाको भाका राखिएको संयन्त्र बनेपनि समस्या समाधान नभएमा फेरि सम्बन्ध तनावग्रस्त हुन पनि सक्छ। बल अहिले ओलीकै कोर्टमा छ र ओलीले निकै सावधान र सचेत भएर कदम चाल्न जरुरी छ। हुन पनि रक्सौल नाका खुले पनि भारतले पेट्रोलियम पदार्थको सहज आपूर्ति हुन नदिई नियन्त्रित अवस्थामा अहिले पनि राखिरहेकै छ।

आयल निगमका प्रवक्ता मुकुन्द घिमिरेले पहिलोपोस्टलाई बिहीबार बताएका छन्, 'मागभन्दा ६० प्रतिशत कम तेल दिइरहेको अवस्था छ।' यसलाई भारतको पोलिटिकल बार्गेनिङको रुपमा हेरिएको छ, जुन प्रधानमन्त्रीको दूतका रुपमा कमल थापाले दिल्ली आएर गरेका चार बुँदे लिखित सम्झौताको पूर्ण कार्यान्वयन नहुन्जेल कायमै रहने विश्वास गरिएको छ।

## चाइना कार्ड असफल भएपछि भारतको यात्रा : सूद

नेपालको कार्यकालमा कडा आलोचित भएका भारतीय राजदूत मध्ये एक राकेश सुदले पनि ओलीले चाइना कार्ड खेल्न खोजे पनि असफल भएपछि भारत यात्रामा आउन लागेको टिप्पणी गरेका छन्।

द हिन्दुमा बिहीबार प्रकाशित लेखमा सुद लेख्छन्, 'अरुले जस्तै ओलीले पनि चीनमा प्रतिनिधिमण्डल पठाएर तिब्बती सीमाबाट वैकल्पिक आपूर्ति रुट विकास गर्ने भन्दै चाइना कार्ड खेल्न खोजेका थिए। तर यसको सीमितता चाँडै नै स्पष्ट भयो।'

ओलीले भारतसँगको असन्तुष्टि देखाउन नेपाली राष्ट्रवादको झण्डा उचालेको र पहिलो विदेश भ्रमण चीनको गर्ने भनी भन्न थालेकोमा समेत सुदले व्यङ्ग्य गरेका छन्। तर व्यवहारवादी भएपछि ओलीले संविधान संशोधनको मस्यौदा दुई पटक आफ्ना विदेश मन्त्रीलाई दिल्ली पठाएर सेयर गरेको पनि उनले लेखेका छन्।

# मधेसी मोर्चाद्वारा राजनीतिक संयन्त्र अस्वीकार

19th February 2016 | ७ फागुन २०७२ |

- **पहिलोपोस्ट-**

**काठमाडौं :** प्रधानमन्त्री केपी शर्मा ओलीको भारत भ्रमणको पूर्वसन्ध्यामा हतारहतार गठन गरिएको राजनीतिक संयन्त्र संयुक्त लोकतान्त्रिक मधेसी मोर्चाले अस्वीकार गरेको छ।

सरकारले एकतर्फी ढंगले गठन गरेको राजनीतिक संयन्त्रले आन्दोलनकारी पक्षका माग सम्बोधन नगर्ने दाबी गर्दै मोर्चाले संयन्त्र अस्वीकार गरेको हो।

बिहीबार बेलुका बसेको मन्त्रीपरिसद बैठकले संघीय प्रदेशहरुको सीमाकंनका विषयमा तीन महिनाभित्र सुझाव दिन उपप्रधान तथा परराष्ट्र मन्त्री कमल थापाको नेतृत्वमा राजनीतिक संयन्त्र गठन भएको छ। ११ सदस्यीय संयन्त्रमा अन्य पद भने खाली छन्।

बुधबार मधेसी मोर्चाका नेतासहित बसेको बैठकमा आयोगको क्षेत्राधिकारका विषयमा सहमति नजुटेपछि सरकारले एकतर्फी रुपमा संयन्त्र गठन गरेको थियो।

- सम्बन्धितः **ओलीलाई हतारमा संयन्त्र गठनको आवश्यकता किन पऱ्यो?**

राजनीतिक संयन्त्र 'मधेसका माग पुरा गर्नुभन्दा पनि आफ्नो विदेश भ्रमणलाई उपलब्धिपूर्ण देखाउने मनसायका साथ' गठन गरिएको मोर्चाले आरोप लगाएको छ।

'मधेसका माग पुरा गर्नु भन्दा पनि आफ्नो विदेश भ्रमणलाई उपलब्धिपूर्ण देखाउने मनसायका साथ सम्वाद नै विथोल्ने गरी तानाशाही प्रवृत्ति देखाउँदै एकतर्फी ढंगले सिमाकंनमा देखिएको समस्या समाधान गर्न भनी बनाएको राजनीतिक संयन्त्रले आन्दोलनकारी पक्षहरुको माग सम्बोधन नगर्ने भएकोले राजनीतिक संयन्त्रलाई मोर्चा अस्वीकार गर्दछ', मोर्चाद्वारा जारी विज्ञप्तिमा उल्लेख छ।

**हेर्नुहोस् मोर्चाको विज्ञप्तिः**

# संयुक्त लोकतान्त्रिक मधेशी मोर्चा

प्रेस-विज्ञप्ति

मितिः-२०७२-११-७

विगत ६ महिना देखिको जारी मधेश आन्दोलनलाई निर्णायक र निश्कर्षमा पुऱ्याउन हामीले निरन्तर वार्ता र सम्वादको माध्यमवाट अगाडी वढन खोज्दा खोज्दै प्रमुख तीन दलले शुरु देखी नै एकतर्फी ढंगले संख्याको दम्भ र अंहकार देखाउदैं अपुरो संविधान जारी गरे र फेरी आन्दोलन दवाउने उद्देश्यका साथ हाम्रो सरोकार र सहमति वेगर नै संविधान संशोधन पनि गरे जसमा मधेशको माँगलाई सम्वोधन गरिएन । त्यति दुश्प्रयास गरे पनि आन्दोलन रोक्न सफल नभएपछि अहिले फेरी मधेशी अदिवाशी, जनजाती, थारु, मुस्लिम, दलित, पिछडावर्ग लगायत जनताको अधिकार प्राप्तीको संघर्षलाई समाप्त गर्न षड्यन्त्रमूलक ढंगले मधेशको माँग पूरा गर्नू भन्दा पनि आफ्नो विदेश भ्रमणलाई उपलब्धिपूर्ण देखाउने मनसायका साथ सम्वाद नै विथोल्ने गरी तानाशाही प्रवृति देखाउदै एकतर्फी ढंगले सिमाङ्कनमा देखिएको समस्या समाधान गर्न भनि बनाएको राजनीतिक संयन्त्रले हामी आन्दोलनरत पक्षहरुको माँग सम्वोधन नगर्ने भएकोले यस्तो राजनीतिक संयन्त्रलाई मोर्चा अस्विकार गर्दछ ।

१. डा. मंगलसिद्धि मानन्धर, संघिय समाजवादी फोरम, नेपाल

२. सुरेन्द्र तिवारी, तराई-मधेश लोकतान्त्रिक पार्टी

३. लक्ष्मण लाल कर्ण, सद्भावना पार्टी

४. रामनरेश राय यादव, तराई-मधेश सद्भावना पार्टी

५. केशव झा, राष्ट्रीय मधेश समाजवादी पार्टी

६. मो. शब्विर खान, नेपाल सद्भावना पार्टी

७. परमेश साह, मधेशी जनअधिकार फोरम, (गणतान्त्रिक)

# प्रधानमन्त्रीको टोलीमा खैरो कोट र सेतो दौरा सुरुवाल अनिवार्य

19th February 2016 | ७ फागुन २०७२ |

**काठमाडौं :** प्रधानमन्त्री केपी शर्मा ओलीको भारत भ्रमण टोलीमा समावेश सदस्यहरुलाई सेतो दौरा सुरुवाल र खैरो कोट अनिवार्य गरिएको छ।

टोलीमा रहेका प्रधानमन्त्री ओली, उपप्रधानमन्त्री तथा परराष्ट्रमन्त्री कमल थापा, अर्थमन्त्री विष्णु पौडेल, गृहमन्त्री शक्तिबहादुर बस्नेत लगायत भ्रमण टोलीमा सहभागी सबैले सेतो दौरा सुरुवाल र खैरो कोट लगाएका छन्।

त्यसबाहेक सरकारी टोलीमा समावेश प्रधानमन्त्रीका सल्लाहकार, सभासदहरुले पनि सेतो रङको दौरा सुरुवाल र खैरो कोट लगाएका छन्। टोपीमा भने रङ ढाकाटोपी र कालोटोपी दुवै छन्। भ्रमण टोलीमा समावेश पत्रकारहरुले सेतो दौरा सुरुवाल लगाएपनि खैरोकोट अनिवार्य छैन।



भ्रमण टोलीका धेरै सदस्यले केही दिनअघि मात्र ड्रेसकोडबारे थाहा पाएकाले ड्रेस तयार पार्न सास्ती खेपेका थिए। उनीहरुले अतिरिक्त शुल्क तिरेर दौरा सुरुवाल र कोट सिलाउन लगाएका थिए।

प्रधानमन्त्रीका एक सल्लाहकारले भने 'खैरो कोट नै अनिवार्य गरेपछि बढी ज्याला तिरेर सिलाउन लगाएँ।' शुक्रबार भारत प्रस्थात गर्नुअघि धेरै सदस्यले फोटो खिचेर सामाजिक सञ्जालमा पनि पोस्ट गरेका छन्।



**राससका पत्रकार प्रकाश सिलवालले फेसबुकमा पोस्ट गरेको फोटो।**

# भारतीय विदेश मन्त्री सुषमा स्वराजबाट दिल्लीमा प्रधानमन्त्रीको स्वागत

19th February 2016 | ७ फागुन २०७२ |

- **उमेश श्रेष्ठ/पहिलोपोस्ट-**

**नयाँ दिल्ली :** प्रधानमन्त्री केपी शर्मा ओली भारतको ६ दिने औपचारिक भ्रमणका लागि नयाँ दिल्ली आइपुगेका छन्। प्रधानमन्त्री ओली नेपाल एअरलाइन्सको रेगुलर फ्लाइटमार्फत दिउसो पौने पाँच बजे दिल्ली उत्रेका हुन्।

प्रधानमन्त्री ओलीलाई नयाँ दिल्लीमा भारतीय विदेशमन्त्री शुष्मा स्वराजले स्वागत गरिन्। प्रधानमन्त्रीलाई स्वागत गर्न भारतका आयुष (आयुर्वेद मन्त्री श्रीपद यस्सो नाइक, परराष्ट्र मन्त्रालयमा नेपाल डेस्क हेर्ने सहसचिव अभय ठाकुर, भारतका लागि नेपाली राजदूत दीपकुमार उपाध्याय र भारतका सिस्टाचार महापाल पनि विमानस्थलमा पुगेका थिए।

प्रधानमन्त्री ओली आजै साँझ प्रजातन्त्र दिवसको उपलक्ष्यमा भारतस्थित नेपाली दूतावासद्वारा आयोजित कार्यक्रममा सहभागी हुनेछन्।कार्यक्रममा ५ सयभन्दा बढीलाई आमन्त्रण गरिएको दूतावासले जनाएको छ।

शुक्रबारबाटै सुरु भए पनि ओलीले खास भ्रमण भने शनिबारबाट थाल्नेछन्। शनिबार बिहान १० बजे राष्ट्रपति भवनमा ओलीको औपचारिक स्वागत हुनेछ।

## जानुअघि प्रधानमन्त्रीः 'कुनै पानी धमिलिने छैन'

भ्रमणको पूर्वसन्ध्यामा बिहीबार पत्रकार सम्मेलन गरेर प्रधानमन्त्री ओलीले भारत भ्रमणमा आफूले मित्रता, सहअस्तित्व र पारस्परिक सहकार्यको भाव लिएर जान लागेको उल्लेख गरेका थिए। 'म खाली डोको लिएर डोकाभरी केही लिएर आउँछु भनेर जान लागेको होइन', ओलीले भने।

भ्रमणका क्रममा हैदरावाद हाउसबाट भारतीय प्रधानमन्त्रीसँगै रिमोटबाट ढल्केबर मुजफ्पुर प्रसारण लाइनको उद्घाटन गर्न लागेका ओलीले नेपालमा पानी धमिलिन्छ कि भन्ने भारतीय चिन्ता हटाउने आश्वासन व्यक्त गरे। 'भारतलाई नेपालले केही बिगारदिन्छ कि पानी धमिल्याएर तलतिर पठाउँछ कि भन्ने पिर छ। त्यो पिरमा हामी भन्ने छौं - यहाँ कुनै पानी धमिलिने छैन, पानी आनन्दले जस्तो छ त्यस्तै बग्न दिन्छौं, हिउँदमा सङ्गलो, बर्षामा धमिलो।'

## ओलीको योजनाः मित्रता सुदृढ

भारत भ्रमणको तीन दिनअघि मंगलबार व्यवस्थापिका संसदलाई सम्बोधन गर्दै आफू 'कसैलाई दोषारोपण गर्न नभइ समझदारी विकास गर्न भारत भ्रमणमा जान लागेको' बताएका थिए। मित्रतालाई सुदृढ बनाउन आफू भारत जान लागेको उनको दाबी थियो।

'भारतसँग मित्रतापूर्ण सम्बन्ध अगाडि बढाउन चाहन्छौं। मित्रतापूर्ण सम्बन्ध छँदैछ, बीचमा केही असमझदारीका कुराहरु भए, हिजो केही अप्रिय खालका कुरा लागेपनि ती कुराहरुमा अल्झिएर बस्ने होइन नयाँ शिराबाट, नयाँ वातावरणमा, नयाँ ढंगले मैत्री सम्बन्धलाई अगाडि बढाउनुपर्छ', उनको भनाई थियो।

## 'विवादास्पद सम्झौता गर्दिनँ'

भारत भ्रमणका क्रममा गोप्य सम्झौता हुन्छन् भन्ने 'आमशंका' लाई खारेज गर्दै ओलीले भ्रमणअघि पटकपटक कुनै विवादास्पद नगर्ने प्रष्टीकरण दिएका थिए।

२८ माघमा एमाले विद्यार्थी संगठन अनेरास्ववियुको २२ औं महाधिवेशन उद्घाटन गर्दै ओलीले 'विवादास्पद र नेपाललाई नोक्शान हुने कुनै पनि सम्झौता नगर्ने' बताएका थिए।

ओलीका सत्ता साझेदार एमाओवादी अध्यक्ष पुष्पकमल दाहाल प्रचण्डले पनि प्रधानमन्त्री ओलीको भारत भ्रमण बिग्रेको सम्बन्ध सुधार्नका लागि मात्र भएको बताएका थिए। भारतसँग चिसिएको सम्बन्धले लामो समय नाकाबन्दी बेहोरेका कारण उनको भ्रमण सम्बन्ध सुधारका लागि भएको प्रचण्डको भनाइ थियो।

## भारतको अपेक्षा

प्रधानमन्त्री केपी शर्मा ओलीको भ्रमणको पूर्वसन्ध्यामा भारतले संविधान संशोधनलाई सकारात्मक भन्दै बाँकी विषयमा सकारात्मक चर्चा हुने आशा व्यक्त गरेको थियो।

सीमाङ्कन लगायतका विषयलाई तीन महिनाभित्र टुङ्ग्याउने गरी काठमाडौंमा राजनीतिक संयन्त्र गठन गर्नु र दिल्लीले यस्तो सन्देश दिनु सँगसँगै जस्तो भएको थियो। के नागरिकता लगायतका विषयमा दिल्ली

प्रधानमन्त्री ओलीसँग आफ्नो चासो राख्नेछ त? भन्ने प्रश्नमा नयाँ दिल्लीस्थित विदेश मन्त्रालयमा आयोजित नियमित पत्रकार भेटघाटमा प्रवक्ता विकास स्वरुपले भने, 'यो इस्यु मधेसीले पहिलेदेखि उठाउँदै आएकोछ यसमा नेपाल सरकारसँग वार्ता भइरहेको छ।' 'हाम्रो अपेक्षा यही छ कि जुन किसिमले दुई वटा संशोधन संविधानको पास भएको छ जसलाई हामीले सकारात्मक कदमको संज्ञा दिएका थियौं, त्यसैगरी त्यस्तै सकारात्मक दिशामा बाँकी मुद्दामा सकारात्मक चर्चा हुनेछ र छिट्टै नै हल निस्कनेछ', उनले भने।

## मिडिया कभरेज

प्रधानमन्त्री केपी ओलीले ६ दिने औपचारिक भ्रमण गर्ने दिनलाई यहाँका पत्रपत्रिकाले खासै महत्व दिएका छैनन्। दिल्लीबाट शुक्रबार बिहान निस्किएका अधिकांश पत्रिकाहरुमा जेएनयु विवाद नै मुख्य समाचारका रुपमा रहेको छ।

कतिपय पत्रिकाले आजदेखि हुन लागेको भ्रमणबारे उल्लेख गर्नसमेत जरुरी ठानेका छैनन्। कस्तो छ मिडिया कभरेज यहाँ पढ्नुस्।

## ओलीले ६ दिनको भ्रमणमा के के गर्दैछन् त?




**पहिलो दिन** शुक्रबार उनी दिउसो साढे ४ बजे दिल्ली पुगे। उनी साँझ नेपाली दूतावासको आयोजनामा प्रजातन्त्र दिवसको उपलक्ष्यमा आयोजित कार्यक्रममा उनी सहभागी हुनेछन्।

**दोश्रो दिन** शनिबार बिहान १० बजे उनलाई राष्ट्रपति भवनमा औपचारिक स्वागत गरिनेछ। साढे १० बजे राजघाटमा प्रधानमन्त्रीले पुष्पअर्पण गर्नेछन्। यस्तै ११ बजे राष्ट्रपति भवनमा भारतका विदेश मन्त्री शुस्मा स्वराजसँग भेट गर्नेछन्। त्यसपछि उनले १२ बजे हैदराबाद हाउस भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीसँग भेट गर्नेछन्। दिउसो १ बजे हैदराबाद हाउसमा उनीहरुबीच सम्झौताहरुको हस्तान्तरण हुनेछ। त्यसपछि प्रधानमन्त्रीले ४ बजे राष्ट्रपति भवनमा भारतीय गृहमन्त्री राजनाथ सिंहसँग भेटघाट गर्नेछन्। ४ बजेर ४५

मिनेटमा राष्ट्रपति भवनमै भारतीय वित्तमन्त्री अरुण जेट्लीसँग उनको भेट तयर गरिएको छ। साढे ५ बजे मौलाना आजाद रोडमा भारतका उपराष्ट्रपतिसँग ओलीको भेटको कार्यक्रम राखिएको छ। यस्तै ७ बजे राष्ट्रपति भवनमा भारतका राष्ट्रपतिसँग भेट

**तेश्रो दिन** आइतबार प्रधानमन्त्री बिहान ९ बजे देहरादुन जानेछन्। साढे १० बजे तेहरी हाइड्रो पावर प्रोजेक्ट भ्रमणका लागि त्यसतर्फ प्रस्थान गर्नेछन्। १ बजेर ५० मिनेटमा दिल्ली फर्केपछि नउ साढे तीन बजे राष्ट्रपति भवनमा भारतीय नेताहरुसँग भेटघाट गर्नेछन्।

**चौंथो दिन** सोमबार साढे ९ बजे उनले राष्ट्रपति भ्रवनमा भारतीय उर्जा राज्यमन्त्री पियुष गोयलसँग भेटघाट गर्नेछन्। ११ बजे इन्डियन काउन्सिल फर वर्ल्ड अफेयरमा ओलीले सम्बोधन गर्नेछन्। यस्तै साँझ ६ बजे होटेल ताज प्यालेसमा भारतीय उद्यमीहरुसँग बिजनेस मिटिङ गर्नेछन्।

**पाँचौ दिन** मंगलबार बिहान साढे ७ बजे गुजरातको भुज भ्रमणमा निस्कनेछन्। त्यहाँ भूकम्पपछिको पुनर्निर्माण कार्य अवलोकन गरेपछि ९ बजेर ४५ मिनेटमा उनले होटेल रिजेन्टा रिसोर्टमा गुजरात सरकारको प्रस्तुति अवलोकन गर्नेछन्। साढे ११ बजे भिमासार पुनर्वास क्षेत्रको भ्रमण गर्ने र त्यहाँका स्थानीयबासीसँग छलफल गर्ने कार्यक्रम छ। त्यसपछि प्रधानमन्त्री ओली १ बजेर १५ मिनेटमा मुन्द्रा पुनर्वास क्षेत्र र त्यहींको जिके अस्पतालको भ्रमण मानेछन्। दिउसो ४ बजे मुम्बइ फर्केर उनी साढे ७ बजे राज भवनमा महाराष्ट्रका गभर्नरसँग भेटघाट गर्नेछन्।

भ्रमणको **अन्तिम दिन** बुधबार उनी मुम्बईबाट साँझ ५ बजे स्वदेश फिर्ता हुनेछन्।

# दिल्लीस्थित नेपाली दूतावासमा प्रधानमन्त्री ओली

19th February 2016 | ७ फागुन २०७२ |

**नयाँ दिल्ली :** प्रधानमन्त्री केपी शर्मा ओली दिल्ली स्थित नेपाली राजदूतावास पुगेका छन्। शुक्रबार साँझ राजदूतावासले आयोजना गरेको विशेष समारोहमा ओली सहभागी भएका छन्।

आज दिउँसो राष्ट्रिय ध्वजावाहक नेपाल एयरलाइन्सबाट दिल्ली पुगेका प्रम ओलीलाई स्वागत गर्न भारतीय विदेश मन्त्री सुषमा स्वराज आफैँ पुगेकी थिइन्।

ओलीको स्वागतमा दिल्लीमा रहेको दूतावासले विशेष तयारी गरेको छ।



प्रम ओलीको स्वागतमा बालिएको झिलमिल बत्ती।

# दिल्ली उत्रने बित्तिकै प्रधानमन्त्री ओलीलाई मधेसी-थारुको कालो झण्डा

19th February 2016 | ७ फागुन २०७२ |

**नयाँ दिल्ली** : ६ दिने राजकीय भ्रमणका लागि यहाँ आइपुगेका प्रधानमन्त्री केपी ओलीलाई नयाँ दिल्लीस्थित अन्तर्राष्ट्रिय विमानस्थलबाट निस्कने बित्तिकै कालो झण्डा देखाइएको छ।

भारतको जवाहरलाल नेहरु युनिभर्सिटी (जेएनयु) र दिल्ली युनिभर्सिटीमा अध्ययनरत मधेसी-थारु विद्यार्थीहरुको संगठन युनाइटेड मधेसिज अफ नेपाल एसोसिएसनमा आवद्धले ओलीलाई कालो झण्डा देखाएका हुन्।

आन्दोलनरत मधेसी मोर्चाको सहमति बिना एकपक्षीय रुपमा राजनीतिक संयन्त्र गठन गरी ओली भारत भ्रमणमा हिँडेका थिए। मोर्चाले संयन्त्र अस्वीकार्य भएको शुक्रबारै विज्ञप्तिमार्फत् सार्वजनिक गरिसकेको छ।



# बलिउड हिरोहिरोइन पनि भेट्दैछन् प्रम ओली

19th February 2016 | ७ फागुन २०७२ |

- **उमेश श्रेष्ठ -**

**नयाँ दिल्ली** : ६ दिने राजकीय भ्रमणका लागि यहाँ आएका प्रधानमन्त्री केपी शर्मा ओलीले नेता र व्यापारीहरु मात्र होइन, बलिउड हिरोहिरोइनलाई समेत भेट्ने कार्यक्रम तय भएको छ।

नेपालको परराष्ट्र मन्त्रालय र भारतको विदेश मन्त्रालय दुवैको कार्यक्रम लिस्टमा नभए पनि अन्तिम समयमा बनाइएको कार्यक्रम अनुसार भ्रमणको अन्तिम दिन मिटिङ विद् बलिउड स्टार्स मिलाइएको छ।

प्रम ओलीले बुधबार मुम्बईबाट स्वदेश प्रस्थान गर्ने फ्लाइट समात्ने गरी दुई घण्टाअघि बलिउड स्टारहरुलाई भेट्ने कार्यक्रम छ। यसअघि प्रमले १ बजे बिजनेस कम्युनिटीलाई मात्रै भेट्ने कार्यक्रम तय भएको थियो।

भारतको फिल्म नगरी मुम्बईमा आउँदा बलिउड स्टारहरुलाई भेट्ने कार्यक्रम टाइट सेड्युल हेर्दा हतारमा मिलाइएको जस्तो देखिएको छ। प्रमसित को-को फिल्म स्टारहरुले भेट्ने छन्, त्यो खुलिसकेको छैन। तर आमिर खान, शाहरुख खान, दीपिका पाडुकोण वा ऐश्वर्या रायसित हाम्रा प्रधानमन्त्रीको पोज पोजका फोटो हेर्न पाइने आशा भने तपाईं गर्न सक्नुहुन्छ।

# राष्ट्रपति भवनमा रात बिताएका प्रम ओली आज दिल्लीमा केके गर्दैछन्?

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ –**

**नयाँ दिल्ली :** हिजो यहाँ आइपुगेका प्रधानमन्त्री केपी शर्मा ओलीले बेलुकी नेपाली दूतवासको कार्यक्रमपछि राष्ट्रपति भवनमा रात बिताए। आज बिहान १० बजेदेखि नै उनी सक्रिय हुनेछन्। बिहान १० बजे राष्ट्रपति भवनमा उनको औपचारिक स्वागत कार्यक्रम आयोजना हुनेछ भने साँझ भारतका उप राष्ट्रपतिसँगको भेट भएपछि आजको औपचारिक कार्यक्रम अन्त्य हुनेछ।

## महत्वपूर्ण भेट राष्ट्रपति भवनभित्रै

बिहान १० बजे राष्ट्रपति भवनमा औपचारिक स्वागत ग्रहण गरेपछि १०:३० बजे उनी राजघाट पुग्नेछन्। त्यहाँ पुष्पहार चढाउने छन्। गान्धीको समाधीमा पुष्पहार चढाएलगत्तै उनको राष्ट्रपति भवनमा नै महत्वपूर्ण भेटहरु हुनेछन्।

भारतसँग चिसिएको सम्बन्ध सुधार नै प्रमुख अजेन्डा रहेको भ्रमणको आज दोस्रो दिन बिहान ११ बजे राष्ट्रपति भवनमा उनको भारतीय विदेशमन्त्री सुषमा स्वराजसँग छलफल हुनेछ। सरकारी मिडियाबाहेकलाई

निषेध गरिएको छलफलपछि भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीसँग प्रधानमन्त्री ओलीले भेट्नेछन्।

## ठूला सम्झौताको न्युन सम्भावना

हैदरावाद हाउसमा प्रम ओली र भारतीय समकक्षी नरेन्द्र मोदी औपचारिक कार्यक्रममा संयुक्त रुपमा सहभागी हुनेछन्। यही द्वीपक्षीय वार्ता हुनेछ। त्यहाँ हुने छलफल र कुनै सहमति अथवा निर्णय भयो भने हस्ताक्षर हुने कार्यक्रम छ। हस्ताक्षरका लागि १ बजेको समय निर्धारण गरिएको छ। भ्रमणको कार्यसूचीमा प्रस्टरुपमा 'सहमति/सम्झौता भएमा...' भन्ने शब्द प्रयोग भएकाले कुनै ठूलो सम्झौताको सम्भावना कम देखिएको छ। यद्यपि हैदरावाद हाउसबाटै संयुक्त प्रेस वक्तव्य जारी हुने छ।

दिउँसो ४ बजे फेरि राष्ट्रपति भवनमै भारतीय गृह मन्त्री राजनाथ सिंहसँग प्रम ओलीको भेट र छलफल हुने छ। त्यसको आधाघन्टापछि ४:३० बजे बित्त मन्त्री अरुण जेटलीसँग छलफल हुने कार्यक्रम छ।

भ्रमणको दोस्रो दिन साँझ ५:३० बजे भारतीय उप राष्ट्रपतिसँगको भेटपछि फेरि उनी राष्ट्रपति भवनमै रात विताउनेछन्।

# प्रधानमन्त्री ओलीलाई भारतीय प्रधानमन्त्री मोदीको औपचारिक स्वागत

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ –**

**नयाँ दिल्ली :** भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीले प्रधान मन्त्री केपी शर्मा ओलीको औपचारिक स्वागत गरेका छन्। राष्ट्रपति भवनमा आज बिहान आयोजित औपचारिक स्वागत कार्यक्रममा मोदीले ओलीसँग भेट गरेका हुन्। फोटोमा हेर्नुस स्वागतका दृष्य :



# प्रधानमन्त्री ओलीको सम्मानमा भव्य समारोह

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ –**

**नयाँ दिल्ली :** प्रधानमन्त्री भएपछि पहिलोपटक विदेश भ्रमणमा निस्किएका प्रधानमन्त्री केपी शर्मा ओलीको नयाँ दिल्लीमा आज राजकीय सम्मान सहित स्वागत भएको छ। राष्ट्रपति भवनमा आयोजित समारोहमा भारतीय प्रधानमन्त्री नरेन्द्र मोदी प्रम ओलीको स्वागत गर्न उनी चढेको कारसम्मै पुगेका थिए। मोदीले हात समाउँदै प्रधानमन्त्रीलाई स्वागत गरे।

उनको सम्मानमा भारतीय सैनिकले सलामी अर्पण गर्‍यो। औपचारिक भ्रमणमा गएका ओलीको यो भ्रमणलाई नेपाल भारतबीच चिसिएको सम्बन्ध सुधार गर्ने मुल कडीका रुपमा लिइएको छ। हिजो दिल्ली पुगेका ओली आज विभिन्न औपचारिक कार्यक्रमहरुमा सहभागी हुँदैछन्। महत्वपूर्ण राजनीतिक भेटघाट पनि आजै हुँदैछ।



# मोदीले गरे ओलीको भव्य स्वागत, फोटोमा हेर्नुस् रेड कार्पेटमा ओली

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली :** भारतको ६ दिने राजकीय भ्रमणमा रहेका प्रधानमन्त्री केपी शर्मा ओलीलाई उनका भारतीय समकक्षी नरेन्द्र मोदीले भव्य स्वागत गरेका छन्। भ्रमणको दोस्रो दिन शनिबार बिहान १० बजे प्रधानमन्त्री ओलीलाई भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीले स्वागत गरेका हुन्।

ओलीले राष्ट्रपति भवनमा दिइएको सलामी ग्रहण गरे। ओलीको स्वागतमा राष्ट्रपति भवनमा दुबै देशका राष्ट्रगान बजाइएको थियो। त्यसपछि ओलीलाई रातो कार्पेटमा एस्कोर्ट गरियो। प्रधानमन्त्री ओलीले 'गार्ड अफ अनर' मुस्कुराउँदै अवलोकन गरे। उक्त कार्यक्रममा प्रधानमन्त्री नरेन्द्र मोदीसँगै भारतका गृहमन्त्री राजनाथ सिंह, वित्त मन्त्री अरुण जेट्ली, रक्षा मन्त्री मनोहर पर्रिकार लगायत उपस्थित थिए।



# आउ मिलाउँ हाम्रा हातहरु : फोटोमा हेर्नुस् मोदी-ओली भेटको 'गेस्चर'

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ –**

**नयाँ दिल्ली :** कुटनीतिमा कायम रहेको चिसो सम्बन्ध चिर्दै प्रधानमन्त्री केपी शर्मा ओली र भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीका हातहरु मिलेका छन्। चिसिएको कुटनीतिक सम्बन्धलाई मिलेका यी हातहरुले केही न्यानो दिने अपेक्षा छ।

प्रधानमन्त्री बनेलगत्तै भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीले केपी शर्मा ओलीलाई बधाई दिएका थिए। तर, संविधान निर्माणको विषयलाई लिएर अघिल्लो सरकारदेखि नै भारतसँग चिसिएको नेपालको कुटनीति सम्बन्धले कुनै किनारा लिन भने सकेन। नाकाबन्दी सबैभन्दा केन्द्रमा रह्यो। त्यसयता एकाध पटक भारतीय प्रधानमन्त्री मोदी र प्रधानमन्त्री ओलीबीच टेलिफोन संवादहरु नभएका होइनन्। क्रमश: सम्बन्धको चिसोपन केही कम भएको अनुभूति भयो जव अघोषित रुपमा लगाइएको नाकाबन्दी अघोषित रुपमा नै खुला भयो।

सबैभन्दा प्रमुख नाका वीरगञ्ज खुला हुनु आर्थिक सहजताका लागि बाटो बन्नुमात्र थिएन प्रधानमन्त्री ओलीका लागि विदेश भ्रमणको ढोका खुल्नु पनि थियो। त्यसअनुसार हिजोदेखि प्रम ओली भारत भ्रमणमा छन्। उनको यहाँ भव्य स्वागत भएको छ।

भारतीय प्रधानमन्त्री मोदी र प्रम ओलीका मिलेका हातहरुले केही संकेत गरेको छ – अवका दिन केही सहज हुनेछ। कुटनीतिमा गेस्चरको बेग्लै महत्व हुने गर्छ। हेर्नुस् दृष्यमा : मिलेका हातहरु

# मोदीले ओलीलाई भने- 'काफी स्मार्ट लग रहे हो', फोटोमा हेर्नुस् ओली र मोदीको मिलन

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली :** ६ दिने राजकीय भ्रमणमा रहेका प्रधानमन्त्री केपी शर्मा ओली र उनका भारतीय समकक्षीबीच आज राष्ट्रपति भवनमा हासीमजाक चल्यो। १० बजे मोदीको औपचारिक स्वागत ग्रहण गर्नुअघि उनीहरुबीच रमाइलो कुराकानी भयो।

प्रधानमन्त्री केपी शर्मा ओलीसँग हात मिलाउँदै भारतका प्रधानमन्त्री नरेन्द्र मोदीले  सोधेका थिए- 'और केसे है आप?

उनले फेरि सोधे - सब ठिक है। 'काफी स्मार्ट लग रहे हो।'

त्यसपछि दुबैजना हाँसे। त्यसपछि सुरु भयो ओलीको औपचारिक स्वागत।

हेर्नुस् फोटोः






# प्रधानमन्त्री ओलीले चढाए गान्धीको समाधीमा पुष्पहार

20 th February 2016 | ८ फागुन २०७२ |

**नयाँदिल्ली** : ६ दिने राजकीय भ्रमणका लागि भारतको राजधानी नयाँदिल्लीमा रहेका प्रधानमन्त्री केपी शर्मा ओली शनिबार बिहान साढे १० बजे राजघाटमा रहेको माहात्मा गान्धीको समाधिस्थल पुगेका छन्। त्यहाँ उनले गान्धीको समाधिमा पुष्पहार चढाएका छन्।

त्यस अवसरमा प्रधानमन्त्री ओलीसँगै उनकी पत्नी राधिका शाक्य, उपप्रधानमन्त्री तथा परराष्ट्रमन्त्री कमल थापा, अर्थमन्त्री विष्णु पौडेल, गृहमन्त्री शक्तिबहादुर बस्नेत, भारतका लागि नेपालका राजदूत दीपकुमार उपाध्याय लगायत सहभागी थिए।

गान्धीको समाधीमा पुष्पहार चढाएलगत्तै प्रधानमन्त्री ओली राजनीतिक भेटघाटमा सक्रिय भएका छन्।



# हैदरावाद हाउसमा प्रधानमन्त्री ओली र मोदी भेटवार्ता सुरु

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली** : प्रधानमन्त्री केपी शर्मा ओली र भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीबीच हैदरावाद हाउसमा भेटवार्ता सुरु भएको छ। ६ दिने राजकीय भ्रमणका लागि हिजो भारत आइपुगेका प्रधानमन्त्री ओली र भारतीय प्रधानमन्त्रीबीच द्विपक्षीय हितका विषयमा छलफल सुरु भएको हो।

भारत भ्रमण अघि नै प्रधानमन्त्री ओलीले काठमाडौँमा भ्रमण सम्बन्ध सुधारमा केन्द्रित हुने बताएका थिए। भेटपछि दुवै प्रधानमन्त्रीले संयुक्त पत्रकार सम्मेलन गर्नेछन्। साथै दुई देशले एउटा संयुक्त वक्तव्य समेत जारी गर्नेछ।

त्यसअघि प्रधानमन्त्री मोदीलाई राष्ट्रपति भवनमा सम्मानमा सलामी दिइएको थियो। उनलाई भारतीय प्रधानमन्त्रीले भव्य स्वागत गरेका थिए। साथै ओलीको तारिफ गरेका थिए।



फोटो : @MEAIndia

# ओली-मोदी संयुक्त पत्रकार सम्मेलन (लाइभ)

20 th February 2016 | ८ फागुन २०७२ |

**नयाँ दिल्ली** : प्रधानमन्त्री केपी शर्मा ओली र भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीबीच हैदरावाद हाउसमा भेटपछि अहिले संयुक्त पत्रकार सम्मेलन गरिरहेका छन्। ६ दिने राजकीय भ्रमणका लागि हिजो भारत आइपुगेका प्रधानमन्त्री ओली र भारतीय प्रधानमन्त्रीबीच द्विपक्षीय हितका विषयमा छलफल भएको थियो।

भारत भ्रमण अघि नै प्रधानमन्त्री ओलीले भ्रमण सम्बन्ध सुधारमा केन्द्रित हुने बताएका थिए।

https://youtu.be/z4fVB2XeFRE

# मोदीले भने: नेपालमा संविधान घोषणा हुनु महत्वपूर्ण उपलब्धि

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली :** भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीले संविधानसँग जोडिएका सबै मुद्दालाई सन्तोषजनक निवारण गर्न आग्रह गरेका छन्। दुई देशबीच भएका सातवटा सम्झौताको हस्ताक्षर पछि आयोजित घोषणा कार्यक्रममा मोदीले संविधान घोषणालाई महत्वपूर्ण सफलता भनेका छन्।

'पछिल्लो वर्षहरुमा नेपालले लोकतन्त्र र संघीयतामा प्रशंसनीय सफलता हात पारेको छ। दशकौंको संघर्षपछि नेपालको संविधानको रचना र उसको घोषणा एक महत्वपूर्ण सफलता हो', मोदीले भने।

'यिनै सिद्धान्तको आधारमा राजनीतिक वार्तालापको माध्यमबाट सबै वर्गलाइ साथ लिएर नेपालको संविधानसँग जोडिएका सबै मुद्दाको सन्तोषजकन निवारण गरेर नेपाललाई प्रगति र स्थिरताको बाटोमा लैजानुहुनेछ भारतलाई विश्वास छ', उनको भनाई थियो।

मोदीले नेपालको आर्थिक उन्नती, विकास र सम्पन्नता नै भारतको स्थायी रुची भएको बताए। उनले नेपाल र भारतबीच थप दुईवटा ट्रान्जिट प्वाइन्ट खोल्ने सहमति भएको पनि जानकारी दिए। नेपालको जलविद्युतले नेपालमा उज्यालो र भारतको उर्जा अभावलाई पूरा गर्न सुक्ने भन्दै उनले यसको विकासमा मिलेर काम गर्न सकिने बताए।

नेपालले भूकम्पले उत्पन्न त्रास सामना गरिरहेको भन्दै मोदीले यसलाई भारतको पनि पीडा भन्दै पुनर्निर्माणमा १ खर्ब रुपैयाँ सहयोग गरेको पनि स्मरण गरे। जसमध्ये २५ अर्ब रुपैयाँ अनुदान र बाँकी सहुलियत ऋण रहेको पनि जानकारी दिए।

मोदीले नेपालको स्थिरता भारतको सुरक्षासँग जोडिएको भन्दै यसमा दुवै देशको सहयोग आवश्यक रहेको बताए। उनले आतंकवादको दुबै देश मिलेर सामना गर्नुपर्ने पनि बताए। उनले प्रधानमन्त्री ओलीको नेतृत्वमा नेपाल र भारतको सम्बन्ध नयाँ उचाइमा पनि पुग्ने आशा ब्यक्त गरेका छन्।

## के भने प्रधानमन्त्री ओलीले?

प्रधानमन्त्री केपी शर्मा ओलीले नेपाल र भारतबीच केही महिनादेखि रहेको असमझदारी अन्त्य भएको बताएका छन्। आफ्नो भारत भ्रमणको उद्धेश्य दुई देशबीचको असमझदारी अन्त्य गर्नु रहेको दाबी गर्दै आएका प्रधानमन्त्रीले सम्झौताको हस्ताक्षर पछि आयोजित घोषणा कार्यक्रममा नेपाल र भारतबीच केही महिनायता रहेको असमझदारी अन्त्य भएको स्पष्ट पारेका हुन्। उनले आफ्नो भ्रमणपछि नेपाल र भारतबीच रहेको असमझदारी हटेको समेत बताए।

'भारत र नेपालबीच केही महिनायता देखिएको असमझदारी अब रहेन', प्रधानमन्त्री ओलीले भने, 'अब नेपाल र भारतबीचको सम्बन्धलाई 'फर्वार्ड लुकिङ एप्रोच' मा हेर्नुपर्छ।

भारत र नेपालबीच भएका सातवटा सम्झौतामा हस्ताक्षर भएपछि शनिबार गरिएको पत्रकार सम्मेलनमा प्रधानमन्त्री ओलीले भारतले नेपालको शान्ति प्रक्रिया र राजनीतिक स्थायित्वको प्रक्रियामा लगातार गरेको

सहयोगका लागि धन्यवाद दिए। नेपाल संविधान निर्माणपश्चात आर्थिक विकास र समृद्धिको युगमा प्रवेश गरेको बताउँदै प्रधानमन्त्री ओलीले उच्च आर्थिक रुपान्तरणतर्फ लम्किरहेको भारतको प्रशंसा गरे।

नेपाल-भारत सीमा दुई देशको हितविपरित प्रयोग हुन नदिनेमा दुबै देश सचेत रहेको उनको भनाई थियो। आफ्नो भ्रमण उपयोगी र उत्पादनशील भएको ओलीले बताए।

# केही महिना यता देखिएको असमझदारी अब रहेन : प्रधानमन्त्री ओली

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली** : प्रधानमन्त्री केपी शर्मा ओलीले नेपाल र भारतबीच केही महिनादेखि रहेको असमझदारी अन्त्य भएको बताएका छन्। आफ्नो भारत भ्रमणको उद्धेश्य दुई देशबीचको असमझदारी अन्त्य गर्नु रहेको दाबी गर्दै आएका प्रधानमन्त्रीले शनिबारको संयुक्त प्रेस ब्रिफिङमा नेपाल र भारतबीच केही महिनायता रहेको असमझदारी अन्त्य भएको स्पष्ट पारेका हुन्। उनले आफ्नो भ्रमणपछि नेपाल र भारतबीच रहेको असमझदारी हटेको समेत बताए।

'भारत र नेपालबीच केही महिनायता देखिएको असमझदारी अब रहेन', प्रधानमन्त्री ओलीले भने, 'अब नेपाल र भारतबीचको सम्बन्धलाई 'फर्वार्ड लुकिङ एप्रोच' मा हेर्नुपर्छ।

भारत र नेपालबीच भएका सातवटा सम्झौतामा हस्ताक्षर भएपछि शनिबार गरिएको पत्रकार सम्मेलनमा प्रधानमन्त्री ओलीले भारतले नेपालको शान्ति प्रक्रिया र राजनीतिक स्थायित्वको प्रक्रियामा लगातार गरेको सहयोगका लागि धन्यवाद दिए।

नेपाल संविधान निर्माणपश्चात आर्थिक विकास र समृद्धिको युगमा प्रवेश गरेको बताउँदै प्रधानमन्त्री ओलीले उच्च आर्थिक रुपान्तरणतर्फ लम्किरहेको भारतको प्रशंसा गरे।

नेपाल-भारत सीमा दुई देशको हितविपरित प्रयोग हुन नदिनेमा दुबै देश सचेत रहेको उनको भनाई थियो।

आफ्नो भ्रमण उपयोगी र उत्पादनशील भएको ओलीले बताए।

## के भने भारतीय प्रधानमन्त्री मोदीले?

भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीले संविधानसँग जोडिएका सबै मुद्दालाई सन्तोषजनक निवारण गर्न आग्रह गरेका छन्। दुई देशबीच भएका सातवटा सम्झौताको हस्ताक्षर पछि आयोजित घोषणा कार्यक्रममा मोदीले संविधान घोषणालाई महत्वपूर्ण उपलब्धी भनेका छन्।

'पछिल्लो वर्षहरुमा नेपालले लोकतन्त्र र संघीयतामा प्रशंसनीय सफलता हात पारेको छ। दशकौँको संघर्षपछि नेपालको संविधानको रचना र उसको घोषणा एक महत्वपूर्ण सफलता हो', मोदीले भने।

'यिनै सिद्धान्तको आधारमा राजनीतिक वार्तालापको माध्यमबाट सबै वर्गलाइ साथ लिएर नेपालको

संविधानसँग जोडिएका सबै मुद्दाको सन्तोषजकन निवारण गरेर नेपाललाई प्रगति र स्थिरताको बाटोमा लैजानुहुनेछ भारतलाई विश्वास छ', उनको भनाई थियो।

मोदीले नेपालको आर्थिक उन्नती, विकास र सम्पन्नता नै भारतको स्थायी रुची भएको बताए। उनले नेपाल र भारतबीच थप दुईवटा ट्रान्जिट प्वाइन्ट खोल्ने सहमति भएको पनि जानकारी दिए। नेपालको जलविद्युतले नेपालमा उज्यालो र भारतको उर्जा अभावलाई पूरा गर्न सुक्ने भन्दै उनले यसको विकासमा मिलेर काम गर्न सकिने बताए।

नेपालले भूकम्पले उत्पन्न त्रास सामना गरिरहेको भन्दै मोदीले यसलाई भारतको पनि पीडा भन्दै पुनर्निर्माणमा १ खर्ब रुपैयाँ सहयोग गरेको पनि स्मरण गरे। जसमध्ये २५ अर्ब रुपैयाँ अनुदान र बाँकी सहुलियत ऋण रहेको पनि जानकारी दिए।

मोदीले नेपालको स्थिरता भारतको सुरक्षासँग जोडिएको भन्दै यसमा दुवै देशको सहयोग आवश्यक रहेको बताए। उनले आतंकवादको दुबै देश मिलेर सामना गर्नुपर्ने पनि बताए। उनले प्रधानमन्त्री ओलीको नेतृत्वमा नेपाल र भारतको सम्बन्ध नयाँ उचाइमा पनि पुग्ने आशा ब्यक्त गरेका छन्।

# २२ महिनापछि भारतबाट ६०० मेगावाट विजुली

20 th February 2016 | ८ फागुन २०७२ |

**काठमाडौं :** भारतले नेपाललाई २२ महिनापछि ६ सय मेगावाट बिजुली उपलब्ध गराउने भएको छ। ढल्केबर मुजफ्फरपुर प्रसराण लाइनबाट औपचारिक रुपमा ८० मेगावाट बिजुली दिन थालेको भारतले अबको झण्डै दुई वर्षपछि ६ सय मेगावाट बिजुली दिने सहमति गरेको हो।

भारत भ्रमणमा रहेका प्रधानमन्त्री केपी शर्मा ओली र उनका समकक्षी नरेन्द्र मोदीको उपस्थितिमा भएको दुई पक्षीय सहमति अनुसार भारतले आउँदो असोजसम्ममा दुईसय मेगावाट बिजुली नेपाललाई दिनेछ। तीन दिनअघिबाट परीक्षणका रुपमा ढल्केबर-मुजफ्फरपुर प्रसारण लाइनबाट नेपालमा बिजुली आयात सुरु भएको थियो। दुई देशका प्रधानमन्त्रीले रिमोट थिचेर संयुक्त रुपमा यसको शनिबार उदघाटन गरेका हुन्।

दुई देशबीच भएको सम्झौता अनुसार भारतले नेपाललाई प्रति युनिट साढे पाँच रुपैयाँमा बिजुली दिनेछ। एक साताअघि नेपाल आएका भारतीय विद्युत व्यापार निगमका अधिकारीले नेपाल विद्युत प्राधिकरणसँग यो सम्झौतामा हस्ताक्षर गरेका थिए।

## अरु ८ विषयमा सहमति

प्रधानमन्त्री ओलीको भ्रमणका अवसरमा दुई देशबीच अरु आठवटा विषयमा पनि सहमति भएको छ। सहमति अनुसार भारतले बंगलादेशसँगको नेपालको व्यापारका लागि सिंहबादबाट रेल पारवहन सुविधा (ट्रान्जिट) दिनेछ। यस्तै नेपाल र बंगलादेशबीचको व्यापार बढाउन काकडभिट्टा-बंगलाबन्द करिडोरका लागि पनि भारतले पारवहन सुविधा दिनेछ।

भारतले नेपाललाई तेस्रो मुलुकसँगको व्यापारका लागि विशाखापटनम बन्दरगाहा सञ्चालन गर्न दिने भएको छ। विशाखापटनममा नै भारतले नेपालाई रेल सेवाको सुविधा पनि दिने भएको छ।

भारतले नेपालको तराई क्षेत्रमा सडक पूर्वाधारको विकामा पनि सहयोग गर्ने भएको छ। दुई पक्षबीच यो

विषयमा पनि शनिबार सहमति भएको छ। भित्री तराईको हुलाकी राजमार्ग अहिले भारतीय सहयोगमा नै निर्माण भइरहेको छ।

दुई देशबीच भएको सहमति अनुसार भारतले नेपालको भूकम्पपछिको पुनर्निर्माणका लागि घोषणा गरेको एक खर्ब रुपैयाँ सहयोगमध्ये २५ अर्क रुपैयाँ अनुदान र बाँकी ७५ अर्ब रुपैयाँ सहुलियत पूर्ण ऋणमा परिणत भएको छ। यस्तै दुई देशबीच विशिष्ठ व्यक्तिहरुको संयुक्त समूह गठन गर्ने र नेपाल प्रज्ञा प्रतिष्ठान र भारतको म्युजिक एन्ड ड्रामा एन्ड संगीत नाकटक अकादमीबीच सहयोग आदान प्रदानको समझादारी पनि भएको छ।

# यी हुन् नेपाल र भारतबीच भएका ७ बुँदे ९ समझदारी

20 th February 2016 | ८ फागुन २०७२ |

- **पहिलोपोस्ट-**

**नयाँ दिल्ली :** नेपाल सरकार र भारत सरकारबीच ९ समझदारीमा हस्ताक्षर भएको छ। प्रधानमन्त्री केपी शर्मा ओलीको भारत भ्रमणका क्रममा दुई देशका अधिकारीबीच ७ बुँदे ९ समझदारी भएको हो।

## यस्ता छन् ९ बुँदे समझदारीः

१. नेपालमा भूकम्पपछिको पुनर्निर्माणका लागि भारत सरकारले घोषणा गरेको एक खर्ब रुपैयाँ सहयोगमध्ये २५ अर्ब रुपैयाँ अनुदान र बाँकी ७५ अर्ब रुपैयाँ सहुलियत पूर्ण ऋणमा परिणत गर्ने समझदारी।
२. नेपालको तराई क्षेत्रमा सडक पूर्वाधारको विकास गर्ने समझदारी।
३. नेपाल प्रज्ञा प्रतिष्ठान र भारतको म्युजिक एन्ड ड्रामा एन्ड संगीत नाटक अकादमीबीच सहयोग आदान प्रदान समझादारी।

ट्रान्जिट रुट उपलब्ध गराउने समझदारीः
४. नेपाल र बंगलादेशबीच काकडभिट्टा-बंगलाबन्द करिडोरका लागि भारतले पारवहन सुविधा दिने।
५. विशाखापटनम बन्दरगाहा सञ्चालन गर्ने।

रेल पारबाहन सम्झौताः
६. विशाखापटनमबाट/सम्म रेल सेवा सञ्चालन गर्ने।
७. मुजफ्फरपुर- ढल्केबर प्रसारण लाइन उद्घाटन। (तत्काल ८० मेगावाट र अक्टुबर २०१६ सम्म २०० मेगावाट र २०१७ डिसेम्बरसम्म ६०० मेगावाट बनाइने)
९. नेपाल भारत सम्बन्ध पुनरावलोकन गर्न प्रबुद्ध समूह गठन।

# ओलीले भारतमा भने – संवैधानिक मुद्दा समय तोकेर समाधान गर्छौं

20 th February 2016 | ८ फागुन २०७२ |

- **पहिलोपोस्ट-**

**काठमाडौं :** प्रधानमन्त्री केपी शर्मा ओलीले आन्दोलनरत मधेसी दलहरुले उठाइरहेका मागहरु सम्बोधन गर्दै जाने बताएका छन्। भारतीय प्रधानमन्त्रीसँगको भेटका क्रममा प्रधानमन्त्री ओलीले केही मागहरु सम्बोधन भएको र केही मागहरु सम्बोधन हुने क्रममा रहेको बताएका हुन्।

हैदरावाद हाउसमा भएको भेटमा प्रधानमन्त्री ओलीले सीमाङ्कनका विषय सुल्झाउन उपप्रधान तथा परराष्ट्र मन्त्री कमल थापाको संयोजकत्वमा राजनीतिक समिति गठन भएको समेत जानकारी गराएका थिए।

'संशोधन भएका दुई विषयलाई ध्यानमा राख्दै बाँकी रहेका संवैधानिक विषयहरु पनि समय सीमा तोकेर समाधान हुने विश्वास हामीले लिएका छौं', भेटबारे पत्रकार सम्मेलन मार्फत जानकारी दिँदै भारतीय विदेश सचिव एस जयशंकरले भने, 'प्रधानमन्त्री ओलीले आफ्नो भ्रमणको प्राथमिक उद्देश्य असमझदारी हटाउनु नै रहेको उल्लेख गर्नुभयो र उहाँले सफल भएँ पनि भन्नुभयो।'

पत्रकार सम्मेलनमा नागरिकताको विषयमा सोधिएको प्रश्नमा भने सचिव जयशंकरले भने 'नागरिकताको विषय नेपालको हो। यो इस्यु भारत र नेपालको होइन।' तर उनले नेपालका प्रधानमन्त्रीका तर्फबाट यो विषयमा(नागरिकतामा) समेत सम्बोधन गर्ने प्रतिबद्धता आएको बताए।

पत्रकारले प्रधानमन्त्री ओलीको भनाईमा विश्वास गर्ने आधारबारे सोधेको प्रश्नमा जयशंकरले प्रधानमन्त्रीको भनाईमा विश्वास गर्नु नै अन्तर्राष्ट्रिय सम्बन्धको आधार भएको तर्क गरे।

'प्रधानमन्त्रीले आफ्नो जनतालाई आश्वस्त पारेकोबारे अर्को सरकारलाई भन्छन्, यसरी नै त अन्तर्राष्ट्रिय सम्बन्धहरु चल्छन्।', उनले भने।

## चीन शब्दै प्रयोग भएन

एस जयशंकरले चीनसँग नेपालको नजिकिदों सम्बन्धबारे सोधिएको प्रश्नमा जवाफ दिँदै भने – 'मलाई लाग्छ हाम्रो कुराकानीमा चीन शब्द उच्चारण नै भएन।'

# नेपाल - भारत सम्बन्धमा मोदी मन्त्र ! पढ्नुस् भारतीय प्रमको मन्तव्यको पूर्ण पाठ

20 th February 2016 | ८ फागुन २०७२ |

- **नरेन्द्र मोदी -**

भारत- नेपालबीको मैत्रिपूर्ण इतिहासमा आजको दिन महत्वपूर्ण छ। प्रधानमन्त्रीमा चयन भएपछि पहिलो पटक विदेश यात्राका लागि आउनुभएका ओलीजी र भ्रमण दलका सदस्यहरुलाई हार्दिक स्वागत गर्दछु।

नेपालका गौरवशाली जनताको भारतप्रतिको अथाह प्रेम र सद्भाहवको पनि अभिनन्दन गर्छु। साथै नेपाली नागरिकको आशा, आकांक्षा तथा जागरुकता र विकेको पनि सम्मान गर्दछु। यसै अवसमार नेपालका दिवंगत नेता सुशील कोइरालप्रति श्रद्धाञ्जलि अर्पण गर्छु। भारत-नेपाल मित्रतामा उनको योगदान सधैँ स्मरणीय रहनेछ।

भारत र नेपाल दुई संप्रभुत्व मुलुक हुन्। यी देशबीचको मित्रता घनिष्ट र अदितीय छ। हिमालयको अखंडता तथा गंगाको पवित्रता हाम्रो सशक्त सम्बन्धको साक्षी हुन्। खुला सीमाले दुई देशका जनताबीचको आपसी सम्बन्ध परिभाषित गर्छ। हामी धनी संकृति र परम्पराका साझा उत्तराधिकारी हौं। नेपालमा शान्ति, स्थिरता र नेपालको आर्थिक विकास हाम्रो साझा उद्देश्य हो। भारत-नेपालका यिनै सम्बन्धबारे प्रधानमन्त्री ओलीसँग मैले आज विस्तारमा कुराकानी गरेको छ।

पछिल्ला केही वर्षमा नेपालले लोकतन्त्र र संघीयताको मार्गमा गरेको प्रगति पूरा विश्वले स्वीकार गरेको छ। दशकौं देखि संघर्षपछि नेपालमा संविधानको रचना र त्यसको घोषणा भएको छ, त्यो एउटा महत्वपूर्ण उपलब्धि हो। यसको निर्माणमा नेपालको सरकार र राजनीतिक नेतृत्व तथा समाजका सबै वर्गले पुर्याएको योगदानको अभिनन्दन गर्छु। तर यसको सफलता सहमति र संवादमा नै भर पर्छ। मलाई विश्वास छ, यही सिद्धान्तको आधारबाट, राजनीतिक वार्ताको माध्यमबाट नेपालका सबै वर्गलाई साथ लिएर, संविधानसँग जोडिएका सबै मुद्दाको सन्तोषजनक रुपमा समाधान गर्दै नेपाललाई प्रगति र स्थिरताको मार्गमा लैजानु हुनेछ।

नेपालको आर्थिक उन्नति, विकास तथा सम्पन्नतामा भारतको स्थायी रुची छ। नेपालको यस उद्देश्य पूरा गर्नका लागि हाम्रा संसाधन र संस्थाहरु सधै सकारात्मक छन् र भविष्यमा पनि रहनेछन्। यस सन्दर्भमा भारतको आर्थिक विकास नेपालको सम्पन्नताको एउटा मार्ग बन्न सक्छ। दुवै देशबीच ट्रान्सपोर्ट करिडोरका हाइवेहरु बन्न सक्छ। त्यसैका मध्यनजरमा दुई देशबीच दुई नाका खोल्ने सहमति आज भएको छ। यी दुई नाका खुलेपछि क्षेत्रीय आर्थिक विकास तथा कनेक्टिभिटी बलियो हुनेछ। मरो सन् २०१४ को नेपाल यात्राको समयमा भनेको थिए कि नेपालको जलविद्युत सम्भावना नेपाललाई उज्यालो बनाउनका लागिमात्र होइन कि भारतको आवश्यकता पूरा गर्न सक्ने क्षमताको छ।

मलाई खुसी लागेको छ कि नेपाल र भारत केही हाइड्रोपावर आयोजनामा काम गरिरहेका छन्। ती आयोजनाहरुको कूल क्षमता करिब ७ हजार मेगावाट छ। यी आयोजनाहरु तीब्र र सफल रुपमा बन्न सके नेपालको आर्थिक सम्पन्नताको प्रमुख मार्ग बन्नसक्छ। मुजफ्फरपुर-ढलकेवार
ट्रान्समिसन लाइनको भर्खरै उद्घाटन गरेका छौं, यसबाट तत्काल नेपाललाई ८० मेगावाट विद्युत उपलब्ध

गराउँछ। आगामी दुई वर्षमा यही लाइनले नेपाललाई ६ सय मेगावाट विजुली प्रदान गर्नेछ।

व्यापार र लगानी हामीबीचको सम्बन्धको स्तम्भ हो। यसलाई अझ बलियो बनाउन सकिन्छ। यसका लागि इन्टिग्रिटेड चेकपोस्टको तत्काल निर्माण दुवै देशको हितमा छ। नेपालको तराई क्षेत्रमा सडक निर्माणको आज सम्झौता भएको छ यसले व्यापारको पूर्वाधारमा थप बल प्रदान गर्नेछ। गत वर्ष नेपाले भयंकर भूकम्पको त्रासदी सामना गर्योा। आपत नेपालमा पर्योर, तर त्यसको पीडा हरेक भारतीयलाई भयो। भूकम्पपछिको पुनर्निर्माण आवश्यकताका लागि भारतले एक अर्ब डलर सहयोग प्याकेज घोषणा गरेको थियो। यस क्षेत्रमा आज दुई सम्झौता भएको छ, एक २५ करोड अमेरिकी डलर अनुदान तथा ७५ करोड डलर लाइन अफ क्रेडिटले हाम्रो सहभागितालाई अझ अगाडि लैजाने छ। यस सन्दर्भमा प्रधानमन्त्री ओलीको भुज यात्रा भूकम्पपछिको पुनर्निर्माणका लागि लाभदायक हुनेछ।

आयुर्वेद भारतको प्राचीन सभ्यताको यस्तो प्रभावकारी अंग हो,जसको छाप आजको युगमा पनि उत्तिकै छ। नेपाल पनि आयुर्वेदसँग घनिष्ठ रुपले जोडिएको छ। नेपालमा आयुर्वेदको विस्तार दुवै देशका सांस्कृतिक र व्यापारिक हितका लागि राम्रो हुन्छ। यदि नेपाल चाहन्छ भने भारतले नेपालमा आयुर्वेदिक कलेजहरु खोल्न सक्छ। तिनलाई भारतको आयुर्वेदिक विश्वविद्यालयसँग जोड्न सकिन्छ।

यो प्रस्ट नै छ नेपालको स्थिरता भारतको सुरक्षासँग जोडिएको हुन्छ। प्रधानमन्त्री ओली र म यस विषयमा सहमत छौं कि बढ्दै गरेको अतिवाद र आतंकवादले उत्पन्न गर्ने खतरासँग दुवै देश मिलेर लड्नेछौं। हामी हाम्रा खुला सीमा आतंकवादी र अपराधीले दुरुपयोग हुन दिने छैनौं। यस विषयमा दुवै देशका सुरक्षा एजेन्सीहरु बलियो बनाउनेछौं।

नेपालमा शांति,स्थिरता र सम्पन्नता हाम्रा साझा हितसँग जोडिएका छन्। म र सम्पूर्ण भारत नेपालको आर्थिक विकासको पक्षमा छौं। भारतको सहयोग सदैव सकारात्मक रहेको छ। यसले गर्ने निर्णयहरु नेपालको सरकार र जनताको प्राथमिकताअनुरुपकै रहेका छन्। मलाई पूर्ण विश्वास छ कि तपाईंको कुशल नेतृत्वमा भारत-नेपाल सबन्ध अझै सशक्त हुनेछ, र नयाँ उचाई छुनेछ। यिनै शब्दका साथ एकपटक फेरि तपाई र तपाईको शिष्टमण्डललाई भारतमा स्वागत गर्छु।

# मोदीले प्रधानमन्त्री ओलीलाई सुनाए चार 'स' को मन्त्र

20 th February 2016 | ८ फागुन २०७२ |

- **पहिलोपोस्ट-**

**काठमाडौं :** भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीले नेपालका प्रधानमन्त्री केपी शर्मा ओलीलाई भारतको नेपाल चासोबारे चार 'स' को अपेक्षा रहेको बताएका छन्। मोदीले भारत नेपालको सँधै शुभेच्छुक मुलुक रहेको उल्लेख गर्दै दुई देशको सम्बन्ध नयाँ उचाईमा पुग्ने विश्वास समेत व्यक्त गरे।
भारतीय विदेश सचिव एस जयशंकरले मोदीले बैठकमा हिन्दी शब्द प्रयोग गर्दै भारतले नेपालमा चार वटा स हेर्ने चाहेको बताएको उल्लेख गरे।

## के के हुने चार सुझाव?

- **स्थिरता**
- **समावेशिता**
- **समदृष्टि**
- **समृद्धि**

यसअघि नेपालको संसदमा आएर प्रधानमन्त्री मोदीले 'एच आइ टी" हिटको मन्त्र दिएका थिए। उनले विकासमा साझेदारी तीन विषयमा गर्न भन्दै हाइवेज, इन्फरमेसनवेज र ट्रान्सवेज' मा ध्यान दिनुपर्ने बताएका थिए। नेपाल र भारतबीचको बैठकमा भएका छलफललाई समेत जयशंकरले चार बुदाँमा समेट्ने कोसिस गरे। जयशंकरले भने नेपालले चाहेको र हामीले खासमा छलफलका गरेका विषय यी हुन् -

- **इन्भेष्टमेन्ट विथ इण्डिया**
- **ट्रेड विथ इण्डिया**
- **कनेक्टिभीटि विथ इण्डिया**
- **पावर सप्लाइ फ्रम इण्डिया**

उनले प्रधानमन्त्री ओलीको भ्रमण पछिल्ला घटना हेर्ने भन्दा पनि 'फरवार्ड लुकिङ भिजिट' भएको तर्क गरे।

# विशाखापटनम बन्दरगाह प्रयोग गर्न पाउँदा के हुन्छ नेपाललाई फाइदा?

20 th February 2016 | ८ फागुन २०७२ |

- **पहिलोपोस्ट-**

**काठमाडौं :** नेपाल र भारतबीच भएको ७ बुँदे ९ समझदारीअनुसार अब नेपालले भारतको विशाखापटनम बन्दरगाह प्रयोग गर्न पाउनेछ।

हालसम्म नेपालले तेस्रो मुलुकबाट सामान आयात गर्दा कोलकाता बन्दरगाहा मात्रै प्रयोग गर्न पाइरहेको थियो। नेपाली व्यवसायीले पहिलेदेखि नै विशाखापटनम बन्दरगाह सञ्चालनको पहल गर्न सरकारसमक्ष माग गर्दै आएका थिए।

तत्कालीन प्रधानमन्त्री माधवकुमार नेपालको सन् २००९ अगस्टमा भएको भारत भ्रमणका बेला पनि विशाखापटनम बन्दरगाह प्रयोगमा ल्याउन दिने सहमति भारतले गरेको थियो। झण्डै पाँच वर्षअघि सहमति भएको भए पनि यो विषय कार्यान्वयनमा भने आएन।



लामो समयदेखि छलफल हुँदै आएको यो विषय अब भने एउटा निष्कर्षमा पुगेको छ, भारत यो बन्दरगाह प्रयोग गर्न दिन सहमत भएको छ। के यो बन्दरगाह प्रयोग गर्दा नेपाललाई फाइदा हुन्छ? नेपाली व्यवसायीका अनुसार यो बन्दरगाह प्रयोग गर्न पाउँदा तेस्रो मुलुकबाट सामान आयात गर्न नेपाली व्यवसायीलाई सहज हुने छ।

अहिलेसम्म प्रयोग हुँदै आएको कोलकातामा जाम धेरै हुने र अरु व्यवस्थापकीय सास्ती खेप्नु परेको भन्दै नेपाली व्यवसायीले विकल्पको रुपमा विशाखापटनम प्रयोग गर्नुपर्ने माग गर्दै आएका थिए। नेपालबाट करिब १४ सय ४० किलोमिटरको दुरीमा यो बन्दरगाह छ।

'विशाखापटनम बन्दरगाहा खुलेपछि नेपाली व्यवसायीलाई च्वाइस भएको छ, उनीहरुले अब कोलकाताबाट ल्याउँदा जामको समस्या परे अर्को बाटोबाट ल्याउन सक्छन्,' नेपाल चेम्बर अफ कमर्सका अध्यक्ष राजेशकाजी श्रेष्ठले भने।

भारतले विशाखापटनमबाट सुख्दा बन्दरगाहासम्म रेल सुविधा दिने पनि सहमतिमा उल्लेख छ। यसले

व्यवसायीलाई थप राहत दिने श्रेष्ठले बताए।

दुई वर्षअघि काठमाडौंमा भएको अन्तर्क्रिया कार्यक्रममा विशाखापटनम कन्टेनर टर्मिनलका तत्कालीन प्रमुख सञ्चालन अधिकृत सुशील मुल्चन्दानिले विशाखापटनम बन्दरगाह लागतको हिसाबले पनि नेपाली आयात, निर्यातकर्ताको लागि उपयोगी रहेको बताएका थिए। यो बन्दरगाह प्रयोग गर्दा लागत सस्तो पर्छ ।

## किन सञ्चालन भएन अहिलेसम्म?



तेस्रो मुलुकबाट आएको सामानमा अतिरिक्त ताला लगाउनुपर्ने प्रावधानका कारण विशाखापटनम सञ्चानलनमा आउन सकेको थिएन। डा. बाबुराम भट्टराई नेतृत्वको सरकारका पालमा उपप्रधान तथा परराष्ट्रमन्त्री नारायणकाजी श्रेष्ठ र वाणिज्य तथा आपूर्तिमन्त्री लेखराज भट्टबीचसमेत अतिरिक्त ताला लगाउने विषयमा विवाद भएको थियो।

यस्तै तत्कालीन अर्थ एवं वाणिज्य तथा आपूर्तिमन्त्री शंकरप्रसाद कोइरालाको भारत भ्रमणका बेलामा पनि यो बन्दरगाहा सञ्चालनमा ल्याउने विषयमा छलफल भएको थियो। तर दुवै पक्षले त्यतिबेला पनि गम्भीर चासो नदेखाउँदा कार्यान्वयन हुन सकेको थिएन।

भारतले कोलकाता बन्दरगाहमा पनि अतिरिक्त ताला लगाएपछि नेपाल विशाखापटनम्मा अतिरिक्त ताला लगाउन तयार थियो। कोलकाताभन्दा विशाखापटन बन्दरगाहाबाट नेपालमा सामान ल्याउन सजिलो र सस्तोसमेत हुन्छ। यो बन्दरगाहा भारतको निजी क्षेत्रले सञ्चालन गरेको हो भने कोलकाता भारत सकारले सञ्चालन गरिरहेको छ।

विशाखापटनममा पानीको मात्रा धैरै भएकाले सिमेन्ट, रासायनिक मल ल्याउन सहज छ। कोलकातामा पानिको बहाव कम भएकाले यस्ता सामान ल्याउन धैरै समय लाग्ने गरेको छ।

भारतका मुख्य १३ ओटा बन्दरगाहमध्ये विशाखापटनम बन्दरगाह पनि एक हो। चेन्नइ र कोलकाता बन्दरगाहको बिचमा पर्ने विशाखापटनम पोर्ट आन्ध्रप्रदेशको सबैभन्दा ठूलो हो।

# दिल्ली भ्रमण : के के सहमति भए? नेपालले के पायो?

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ** -

**नयाँ दिल्ली :** भारत भ्रमणमा आएको दोस्रो दिन प्रधानमन्त्री केपी शर्मा ओलीको दैनिकी निकै व्यस्त रह्यो। उनको उपस्थितिमा नेपाल र भारतबीच तीन वटा एमओयु (समझदारी पत्र) दुई वटा विषयमा लेटर अफ एक्सचेन्ज र मुज्जफरपुर-ढल्केबर प्रसारण लाइन उद्‌घाटन तथा दुई देशको प्रबुद्ध समूह गठन गर्ने निर्णय भएको छ।

## नेपाललाई विशाखापत्तनम बन्दरगाहको सुविधा

भारत र नेपालबीच भएको ट्रान्जिट रुटहरु सम्बन्धी लेटर अफ एक्सचेन्जमा विशाखापत्तनम बन्दरगाहको सुविधा नेपालले पाउने गरी भएको सहमति महत्त्वपूर्ण हो।

नेपाल र बंगलादेशबीचको ट्रान्जिटका लागि काकडभित्ता-बंगलाबन्ध कोरिडर र विशाखापत्तनम बन्दरगाहको सञ्चालनका लागि वाणिज्य सचिव ङइन्द्रप्रसाद उपाध्याय र समकक्षी रीता टियोटियाबीच हस्ताक्षर भएको हो।

यो सहमतिपछि नेपाल र बंगलादेशबीच भारतको बाटो गरी हुने सामानको आयातनिर्यातको मोडालिटीमा सामान्यीकरण गरिनेछ। तेस्रो मुलुकबाट आाएको सामानमा अतिरिक्त ताला लगाउनुपर्ने प्रावधानका कारण विशाखापत्तनम संचानलनमा आउन सकेको थिएन।

नारायणकाजी श्रेष्ठ उपप्रधान तथा परराष्ट्रमन्त्री तथा तत्कालीन वाणिज्यमन्त्री लेखराज भट्ट हुँदा अतिरिक्त ताला लगाउने विषयमा ठूलो
विवाद भएको थियो। भारतले कोलकाता बन्दरगाहमा समेत अतिरिक्त ताला लगाएपछि नेपाल विशाखापत्तनममा अतिरिक्त ताला लगाउन तयार थियो।

कोलकाताभन्दा विशाखापत्तनम बन्दरगाहबाट सामान ल्याउन सजिलो र सस्तो हुन्छ। यो बन्दरगाह निजी क्षेत्रले संचालन गरेको हो भने कोलकाताको सरकारले। विशाखापत्तनममा पानीको मात्रा धेरै भएकोले सिमेन्ट, रासायनिक मल ल्याउन सहज छ। कोलकातामा पानीको बहाव कम भएकोले यस्ता सामान ल्याउन धेरै समय लाग्छ।

यो पनि हेर्नुस्-

- **विशाखापटनम बन्दरगाह प्रयोग गर्दा आयात-निर्यातको लागत घट्छ, व्यापारमा कस्तो पर्ला असर ?**

यसैसँग सम्बन्धित हुने गरी अर्को दुई वटा लेटर अफ एक्स्चेन्ज भएको छ जसमा पहिलोले नेपालबाट विशाखापत्तनमसम्म जाने र आउने रेल यातायातको अनुमति दिन्छ भने दोस्रोले बंगलादेशसँग र बंगलादेश भएर तेस्रो देशसँग नेपालले गर्ने व्यापारलाई भारतको सिंगबाद हुँदै रेल ट्रान्जिटको सुविधा दिन सहयोग गर्नेछ।

## जलविद्युतमा पनि भारत निर्भर

पेट्रोलियम पदार्थमा मात्र भारत निर्भर रहँदै आएको नेपाल अब जलविद्युतमा पनि भारत निर्भर हुने लक्षण देखिने गरी अर्को एउटा सहमति भएको छ। प्रधानमन्त्री ओली र भारतीय समकक्षी नरेन्द्र मोदीले हैदराबाद हाउसको बल रुममा संयुक्त घोषणा कार्यक्रममै मुजफ्फरपुर-ढल्केबर प्रसारण लाइनको रिमोट थिची उद्घाटन गरे।

यो प्रसारण लाइनबाट तत्काल ८० मेगावाट बिजुली भारतले नेपाललाई दिन्छ। अक्टोबर २०१६ सम्म यसलाई बढाएर २०० मेगावाट बनाइनेछ भने डिसेम्बर २०१७ सम्म ६०० मेगावाट।

यो प्रसारण लाइनको नेपालतर्फको भाग एक करोड ३५ लाख अमेरिकी डलर सहुलियत ऋणबाट नेपालले बनाएको हो।

## हुलाकी सडकमा नेपालको प्रस्ताव अस्वीकृत

एक दशकअघिदेखिको तराईको हुलाकी सडक निर्माणमा नेपालको प्रस्ताव अस्वीकृत भएपछि खासै केही प्रगति बिनाको एमओयुमा चित्त बुझाउन नेपाल बाध्य भएको छ। यो सडक एक दशकअघि नै भारतले आफै बनाइदिने भनी लिखित प्रतिवद्धता जनाएको थियो। तर भारतले रकम थप्न अस्वीकार गरेपछि नेपालको प्रस्ताव तुहियो।

भारतले भारतीय परामर्शदाता नै अनिवार्य राख्नुपर्ने शर्त पनि अघि सारेको थियो। सडक निर्माण क्रममा जग्गा अधिग्रहण र मुआब्जा दिने विषयमा समेत भारत र नेपालको कुरा मिलेको थिएन।

नेपालले यसमा भारतले ९०० करोड लगानी गर्ने प्रस्ताव राखेको थियो तर भारतले ५०० करोडभन्दा बढी हुन नसक्ने बताएको थियो। ११५२ किमीको दोस्रो चरणको लागि नेपालले गरेको प्रस्ताव डिपिआर नहुन्जेल गर्न नसकिने भारतले बताएको थियो।

भारतको लगानीमा नेपालले बनाउने नयाँ मोडलमा जान भारत तयार रहेको तर भारतीय कन्सलटेन्ट नै चाहिने भारतको शर्तलाई नेपालले  ठेकेदार (कन्ट्रयाक्टर) र परामर्शदाता (कन्सलट्यान्ट) फरकमुलुकको राख्न नमिल्ने कानुनी कठिनाइ रहेको भन्दै अस्वीकार गरेको थियो।

यस्ता असहमतिका बीच ओलीको भ्रमणका क्रममा भएको एमओयुमा झारा टार्ने यस्ता वाक्य मात्रै छन्- यो एमओयुले तराई सडक फेज वन प्रोजेक्ट कूल ५१८ किमीको प्याकेज २,३,४, ५ र ६ का १७ सडकहरुको बाँकी काम द्रुत कार्यान्वयन गर्नेछ।

## भूकम्पपछिको पुनर्निर्माणबारे

भूकम्पपछिको पुनर्निर्माणका लागि यस पटकको भ्रमणमा कुनै नयाँ सहमति भएको छैन। भारत सरकारले यसअघि नै घोषणा गरेको साढे दुई करोड अमेरिकी डलरको अनुदानको उपयोग गर्नेबारे एमओयुमा हस्ताक्षर भएको छ। नेपालले अहिलेसम्म यो अनुदान कसरी उपयोग गरिन्छ भनेर योजना प्रस्तुत गर्न सकेको थिएन।

अहिले भने आवासका लागि १० करोड अमेरिकी डलर भूकम्प प्रभावित १४ जिल्लाका ५० हजार घर बनाउन, ५ करोड अमेरिकी डलर भूकम्प प्रभावित ३१ जिल्लाका स्वास्थ्य, शिक्षा र सांस्कृतिक धरोहर जस्ता क्षेत्रमा खर्च गर्ने गरी चार वटा क्षेत्र पहिचान गरिएको छ।

यो एमओयुमा नेपालका तर्फबाट परराष्ट्र मन्त्री कमल थापा र भारतका तर्फबाट समकक्षी सुषमा स्वराजले हस्ताक्षर गरिन्।

## अन्य एमओयु

नेपाल र भारतबीचको सांस्कृतिक सम्बन्धलाई सुदृढ गर्ने गरी आदान प्रदानको एउटा एमओयुमा हस्ताक्षर भएको छ। त्यसैगरी दुई देशबीचको सम्बन्ध दरिलो बनाउन दुवै देशले प्रवुद्ध समूह गठन गरेको छ। नेपालतर्फको समूहमा केही समयअघि मन्त्रिपरिषद् बैठकद्वारा पारित नाम सांसद राजन भट्टराई पूर्व मन्त्री भेषबहादुर थापा, पूर्व अख्तियार प्रमुख सूर्यनाथ उपाध्याय र पूर्व कानुन मन्त्री निलाम्बर आचार्य छन्।

भारततर्फ सांसद भगतसिंह कोस्यारी, सिक्किम युनिभर्सिटीका पूर्व उपकुलपति महेन्द्र लामा, पूर्व भारतीय राजदूत जयन्त प्रसाद र बीसी उप्रेति रहेका छन्।

हैदराबाद हाउसमा दुई देशका प्रधानमन्त्रीबीच एकल र संयुक्त वार्ता हुनुअघि प्रम ओलीलाई बिहान १० बजे राष्ट्रपति भवनमा आयोजित कार्यक्रममा भव्य स्वागत गरिएको थियो।

प्रम ओलीले गार्ड अफ अनरको अवलोकन गरेका थिए।

राष्ट्रपति भवनबाट प्रम ओलीसहितको टोली सिधै राजघाट लागेका थिए जहाँ उनले महात्मा गान्धीको समाधिमा पुष्पगुच्छा अर्पण गरे।
११ बजे राष्ट्रपति भवनमा नै ओली र भारतीय विदेश मन्त्री सुषमा स्वराजसित भेटवार्ता गरे।

अपराह्न ४ बजे राष्ट्रपति भवनमा ओली र भारतीय गृह मन्त्री राजनाथ सिंहबीच भेट भयो भने पौने ५ बजे भारतीय वित्त मन्त्री अरुण जेट्लीसँग भेट भयो।

साँझ साढे ५ बजे भारतीय उपराष्ट्रपतिसँग ओलीले मौलाना आजाद रोडमा भेट गरे। साँझ ७ बजे राष्ट्रपति भवनमा भारतीय राष्ट्रपति प्रणव मुखर्जीसँग भेटपछि बल्ल ओलीको आजको औपचारिक कार्यक्रम सकिएको थियो।

प्रम ओली आज दोस्रो रात राष्ट्रपति भवनमा बिताउँदै छन्।

# ओलीभन्दा जोली मोदी, यसरी हँसाइरहे उनले

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ** -

**नयाँ दिल्ली :** प्रधानमन्त्री केपी ओली हास्य रसपूर्ण अभिव्यक्तिका कारण प्रख्यात छन्। भारत भ्रमणकै पूर्वसन्ध्यामा आयोजित पत्रकार सम्मेलनमा पनि उनले यस्तै अभिव्यक्ति दिए।

यद्यपि भारतमा उनको यो रुप देखिएको छैन। ओली गम्भीर रुपमा प्रस्तुत भएका छन्। बरु भारतीय प्रधानमन्त्री नरेन्द्र मोदी पो ओलीभन्दा जोली देखिएका छन्।

बिहान १० बजे राष्ट्रपति भवनमा प्रधानमन्त्री ओलीलाई भारतीय समकक्षी नरेन्द्र मोदीले स्वागत गर्ने कार्यक्रम थियो। १० बज्न केही मिनेट बाँकी छँदा मोदीको सवारी चलाइयो राष्ट्रपति भवन परिसरमा। मोदी आइसकेपछि बल्ल ओलीको सवारी चलाइयो।




नेपाली झण्डासहितको कालो गाडी आउन्जेल मोदी कुरेर बसेका थिए। ढोका खोलेर ओर्लिएपछि मोदीले ओलीलाई स्वागत गरे। अनि सोधे, "और कैसे हो आप?"

ओली मोदी जस्तो जोली रुपमा प्रस्तुत भएका थिएनन्। 'बडे स्मार्ट लग रहे हो,' भन्दै मोदीले जिस्काएपछि भने ओली पनि हाँसे।

मोदी र ओलीको दोस्रो भेट भयो हैदराबाद हाउसमा। महत्त्वपूर्ण भेटघाटका लागि यो ठाउँ भारतीय नेताहरुले रोज्ने गर्छन्। हैदराबाद हाउसमा प्रेसको अगाडि दुई प्रधानमन्त्रीले फेरि हात मिलाए। ब्याकड्रपमा नेपाल र भारतका झण्डा थिए।




दायाँबाट दुई प्रधानमन्त्री आए र प्रेसवाला बस्ने ठाउँमा हेरेर हात मिलाएपछि खच्याक खच्याक खच्याक सटर बजेका आवाज सुनिए। हात मिलाएर दुवै त्यहीँको ढोकामा जान मात्र के लागेका थिए, प्रेसका एक जना कराए- सर, सर- प्लिज।

भित्र जान लागिसकेका ओली र मोदी फेरि फर्किए र हात मिलाए। ओली त चुपै थिए, मोदीले भनी हाले- क्या बात है, क्यामेरा पुरानी है क्या !

पत्रकारहरु गलल हाँसे। सेक्युरिटी पनि नमुस्कुराई बस्न सकेन।

ओलीको यो रुप भने संभवतः भोलि आइतबार अपराह्नका लागि मिडिया र नेपाली समुदायसँग राखिएको अन्तर्क्रियामा देखिनेछ। अथवा दिल्ली भ्रमणको क्रममा उनले गम्भीर रुप कायमै पो राख्ने हुन् कि, भन्न सकिन्न।

# भारतीय राष्ट्रपति र मन्त्रीहरुसँग ओलीको भिन्दाभिन्दै छलफल

20 th February 2016 | ८ फागुन २०७२ |

**नयाँ दिल्ली** : पहिलो विदेश भ्रमणका रुपमा भारतको राजधानी नयाँ दिल्ली पुगेका प्रधानमन्त्री केपी शर्मा ओली आज निक्कै व्यस्त रहे। भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीसँग द्वीपक्षीय वार्ता सकेपछि उनले गृह मन्त्री राजनाथ सिंह र अर्थमन्त्री अरुण जेटलीसँग छलफल गरे।

त्यसपछि उनको छलफलको श्रृंखला उपराष्ट्रपति हामिद र राष्ट्रपति प्रणव मुखर्जीसम्म पुगेर आजका लागि टुंगियो। हेर्नुस् प्रम ओलीका भेटका केही दृष्य:



भारतका राष्ट्रपति प्रणव मुखर्जीसँग प्रम ओली





उप राष्ट्रपति हमिद अन्सारीसँग प्रम ओली।





गृहमन्त्री राजनाथ सिंहसँग प्रम ओली



वित्त मन्त्री अरुण जेटलीसँग।

# दिल्लीमा प्रम ओलीलाई कालो झण्डा देखाउनेलाई तिहाड जेल लगियो

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ -**

**नयाँ दिल्ली :** काठमाडौँबाट दिल्ली उत्रिएलगत्तै प्रधानमन्त्री केपी शर्मा ओलीले इन्दिरा गान्धी अन्तर्राष्ट्रिय विमानस्थलमा मधेसी र थारु विद्यार्थीहरुको कालो झण्डाको सामना गर्नुपर्‍यो।

त्यसको केही घण्टापछि यहाँस्थित दूतावासमा गरिएको प्रजातन्त्र दिवसको रात्रिभोज अघिसमेत केही विद्यार्थीहरुले प्रदर्शनको तयारी गरेका थिए।

'उनीहरु दूतावासबाहिर पुग्न नपाउँदै प्रहरीले पक्राउ गरिहाले', जवाहरलाल नेहरु युनिभर्सिटीका रिसर्च स्कलर राजेश सिंहले पहिलोपोस्टलाई भने, 'उनीहरुलाई सार्वजनिक स्थलमा शान्ति खल्बल्याएको भन्दै धारा १०७ र १५१ लगाउँदै तीन दिनको रिमान्ड लिइएको छ।'

पक्राउ परेका १५ जना विद्यार्थीहरुलाई बाराखम्बा रोडबाट पक्राउ गरी मन्दिर मार्ग थाना लगिएको थियो। त्यहाँबाट उनीहरुलाई तिहाड जेल लगिएको छ।

पक्राउ परेकाहरुमा जेएनयुका विकास, सिए अध्ययनरत संजय, प्रविन कर्ण, अभिषेक, उज्ज्वल, दिल्ली विश्वविद्यालयका सूर्य किरणलगायत छन्।

'उनीहरुलाई प्रधानमन्त्री ओली भारत भ्रमणबाट नफर्किएसम्म रिहा नगर्ने जस्तो देखिएको छ', उनले अगाडि भने, 'यसअघि पनि उनीहरुले दूतावास बाहिर प्रदर्शन गरेको र प्रधानमन्त्री ओलीको अन्तर्क्रिया लगायतका कार्यक्रममा बाधा पुर्‍याउन सक्ने संभावनालाई ध्यानमा राख्दै केही दिन हिरासतमा नै राख्ने देखिएको छ।'

जवाहरलाल नेहरु विश्वविद्यालयस्थित (जेएनयु) तराई-मधेश अध्ययन समूहका सदस्य सोहन साहले मधेशी विद्यार्थीहरुलाई दिल्ली पुलिसले नियन्त्रणमा लिएकोमा राजदुतावासबाट कुनैपनि पहल नभएको आरोप लगाए।

## रिहाइका लागि खुलापत्र

पक्राउ परेका विद्यार्थीहरुलाई रिहा गर्ने सिके लाल, दीपेन्द्र झा, विजयकान्त कर्ण लगायतले भारतीय विदेश राज्यमन्त्री सुषमा स्वराजलाई सम्बोधन गर्दै खुला पत्र लेखेका छन्। पत्रमा पक्राउ परेकै दिन राति रिहा गर्ने भनिए पनि नछाडिएको उल्लेख गर्दै मधेसी प्रदर्शनकारीहरुको विचार तथा अभिव्यक्ति स्वतन्त्रताको हनन् भएको जिकिर गरिएको छ।

पत्रमा भारतीय राजदूत रणजित राय र भारतको राष्ट्रिय मानवअधिकार आयोगका कार्यवाहक अध्यक्ष सिरियाक जोसेफलाई पनि बोधार्थ दिइएको छ।

## प्रधानमन्त्री ओलीले भने - भारत भ्रमणको उद्देश्य पूरा भयो, आज यस्ता छन् कार्यक्रम

20 th February 2016 | ८ फागुन २०७२ |

**काठमाडौं :** प्रधानमन्त्री केपी शर्मा ओलीले नेपाल र भारतबीच शनिबार भएको दुईपक्षीय वार्ता र समझदारी दुई देशको सम्बन्ध विस्तारमा महत्वपूर्ण उपलब्धी भएको बताएका छन्। भ्रमण दलका सदस्यहरुलाई भारतीय प्रधानमन्त्री नरेन्द्र मोदी, भारत सरकारका बिभिन्न मन्त्रीहरुसँग भएको छलफल र दुई पक्षीय वार्ताका बारेमा जानकारी गराउँदै प्रधानमन्त्री ओलीले भनेका छन् :

जुन उद्देश्यले मेरो यो भ्रमण भएको हो। त्यो उद्देश्य पूरा भएको छ। मूलत: नेपाल भारतबीच केही समययता देखिएको तिक्तता हटेको छ र भारत सरकारले यो भ्रमणलाई राजकीय सम्मान दिएको कारण पनि दुवै देशको राजनीतिक सम्बन्ध अझै उचाइमा पुगेको छ। दुवै देशबीच भएका समझदारीहरुबाट दुवै देशको राजनीतिक, आर्थिक, विकास निर्माण र सांस्कृतिक सम्बन्धमा महत्वपूर्ण उपलब्धी प्राप्त भएको छ। ती समझदारी नेपालको हितमा छन्।

प्रधानमन्त्रीले ओलीले आफू र भारतका प्रधानमन्त्रीबीच भएको एक्लाएक्लै वार्ता सौहार्दतापूर्ण र फलदायी भएको पनि बताए। भारत सरकारले आफ्नो भ्रमणलाई राजकीय सम्मान दिएकोमा प्रधानमन्त्रीले भारत सरकार र भारतका राष्ट्रपति प्रणव मुखर्जीप्रति आभार व्यक्त गरे।

भ्रमणका क्रममा प्रधानमन्त्री ओलीे आइतबार उत्तराखण्डस्थित तेहरी जलविद्युत् बाँधको अवलोकनका लागि जाँदैछन्। उनी आइतबार नै नयाँ दिल्ली फर्केर यहाँस्थित राजनीतिक दलका नेतासँगको भेटघाटमा व्यस्त रहने प्रेस सल्लाहकार प्रमोद दाहालले जानकारी दिए। ओलीले आजै भारतमा रहेको नेपाली राजदूतावासमा नेपाली समुदाय र सञ्चारकर्मीसँग अन्तरक्रिया गर्नेछन्।

## दिल्लीमा प्रम ओलीलाई कालो झण्डा देखाउनेहरु तिहाड जेल चलान, ओली भारतमा रहुन्जेल नछुट्ने

20 th February 2016 | ८ फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँदिल्ली :** शुक्रबार साँझ दिल्लीस्थित नेपाल राजदूतावासको परिसरबाट प्रकाउ परेका मधेशी विद्यार्थीहरुलाई शनिवार जिल्ला मजिस्ट्रेटको आदेशमा ३ दिनको लागि तिहाड जेल चलान गरिएको छ। उनीहरुलाई दिल्ली प्रहरीले भारतीय फौजदारी कानूनको अपराधिक प्रक्रिया संहिता (Criminal Procedure Code, CrPc) को धारा १०७ र १५१ को अभियोग लगाएको छ।

यही धारा अनुसार २०६८ सालमा दिल्ली प्रहरीले नागरिक अगुवा अन्ना हजारेलाई पक्राउगरी हिरासतमा राखेका थिए। धारा १०७ शान्ति सुरक्षा कायम राख्न र १५१ अनुमानित अपराधलाई रोक्नको लागि प्रयोग गरिन्छ। कुनैपनि सार्वजनिक कार्यक्रम र स्थालमा शान्ति सुरक्षा भंग गरेको र गर्ने चेष्टा गरेको पाएमा धारा १०७ अनुसार बिना कुनै पक्राउ पुर्जी प्रहरीले हिरासतमा लिई २४ घण्टा भित्रै मजिस्ट्रेटको कार्यालयमा

गर्नुपर्छ।

यस अभियोगमा मजिस्ट्रेटले बढीमा १ वर्षसम्म हिरासतमा राख्न सक्ने आदेश दिनसक्छ। कुनै पनि हुनसक्ने अनुमानित अपराधलाई रोक्नको लागि प्रहरीले धारा १५१ अनुसार शङ्का लागेको कुनैपनि व्यक्तिलाई बिनाकुनै पुर्जी २४ घण्टासम्म हिरासतमा राख्न सक्छ। यस धारा अनुसार २४ घण्टा भन्दा बढी हिरासतमा राख्ने अधिकार प्रहरीलाई हुँदैन।

उनीहरुको रिहाईको लागि नेपाल र दिल्ली दुवै ठाँउमा मधेशी नेता र विद्यार्थीहरुले शनिबार दिनभरी पहल गरेका थिए। रिहाईकै पहलमा व्यस्त रहेका एक जना जेएनयुका पूर्व-विद्यार्थीले भने 'राजदूवासले नेपाली नागरिकलाई रिहाई गराउन सहयोग गर्नुको सट्टा अझ केही दिन हिरासतमै राख्नको लागि दिल्ली प्रहरीलाई अनुरोध गरेको पाइयो।'

त्यस्तैगरी, रिहाइकै सिफारिस गर्न काठमाडौँस्थित भारतीय राजदूतावास पुगेका एक अधिकारकर्मीका अनुसार प्रधानमन्त्री केपी शर्मा ओलीको भ्रमण अवधीभरी उनीहरुलाई हिरासतमै राख्न नेपाल सरकारले आग्रह गरेकोले त्यसभन्दा अगाडि  भारत सरकारले छोड्न नमिल्ने भनी जवाफ उच्चतहका एक कुटनीतिज्ञले दिएका छन्। यसरी जेल चलान भएका विद्यार्थीहरु ओली भारत छोडेपछि मात्र छुट्ने निश्चित प्राय: भएको छ।

प्रजातन्त्र दिवसको अवसरमा प्रधानमन्त्री ओलीको सम्मानमा आयोजना गरिएको रात्री भोजलाई लक्षित गरी कालोझण्डा देखाई नाराबाजी गर्ने प्रयास गर्न खोज्दा उनीहरु राजदूतावासको परिसरबाटै प्रकाउ परेका थिए। त्यसभन्दा पहिले उनीहरुले ओलीलाई विमानस्थलबाट निस्किने क्रममा कालो झण्डा देखाई सकेको भएपनि राजदूवासले आफ्ना नजिकका पहाडी समुदायका नेपाली-आप्रवासी तथा विद्यार्थीहरुलाई मात्र भोजमा बोलाएको भन्दै दूतावासमा ओलीलाई कालो झण्डा देखाउन पुगेका थिए।

त्यसक्रममा १५ जना विद्यार्थीहरुलाई बाराखम्बा रोडबाट पक्राउ गरी मन्दिर मार्ग थाना लगिएको थियो। त्यहाँबाट उनीहरुलाई तिहाड जेल लगिएको हो।

# भारत भ्रमणको तेश्रो दिन, यस्ता छन् ओलीको कार्यक्रम

21st February 2016 | ९ फागुन २०७२ |

**काठमाडौं :** ६ दिने भारत भ्रमणको तेश्रो दिन प्रधानमन्त्री केपी शर्मा ओली आइतबार उत्तराखण्डस्थित तेहरी जलविद्युत् बाँधको अवलोकनका लागि जाँदैछन्।

भारतको सबैभन्दा अग्लो बाँध मानिने तेहरी बाँधबाट २४ सय मेगावाट विजुली निकालिएको छ। यो बाँध बनाउँदा करिब १ लाख मानिस विस्थापित भएका थिए। नेपालको पञ्चेश्वर परियोजना पनि यससँग मिल्दोजुल्दो हुने अनुमान गरिएको छ।

प्रधानमन्त्री ओली आइतबार नै नयाँ दिल्ली फर्केर यहाँस्थित राजनीतिक दलका नेतासँगको भेटघाटमा व्यस्त रहने प्रेस सल्लाहकार प्रमोद दाहालले जानकारी दिए। ओलीले आजै भारतमा रहेको नेपाली राजदूतावासमा नेपाली समुदाय र सञ्चारकर्मीसँग अन्तरक्रिया गर्नेछन्।

**'भारत भ्रमणको उद्धेश्य पूरा भयो'**

प्रधानमन्त्री केपी शर्मा ओलीले नेपाल र भारतबीच शनिबार भएको दुईपक्षीय वार्ता र समझदारी दुई देशको सम्बन्ध विस्तारमा महत्वपूर्ण उपलब्धी भएको बताएका छन्। भ्रमण दलका सदस्यहरुलाई भारतीय प्रधानमन्त्री नरेन्द्र मोदी, भारत सरकारका बिभिन्न मन्त्रीहरुसँग भएको छलफल र दुई पक्षीय वार्ताका बारेमा जानकारी गराउँदै प्रधानमन्त्री ओलीले भनेका छन् :

जुन उद्देश्यले मेरो यो भ्रमण भएको हो। त्यो उद्देश्य पूरा भएको छ। मूलत: नेपाल भारतबीच केही समययता देखिएको तिक्तता हटेको छ र भारत सरकारले यो भ्रमणलाई राजकीय सम्मान दिएको कारण पनि दुवै देशको राजनीतिक सम्बन्ध अझै उचाइमा पुगेको छ। दुवै देशबीच भएका समझदारीहरुबाट दुवै देशको राजनीतिक, आर्थिक, विकास निर्माण र सांस्कृतिक सम्बन्धमा महत्वपूर्ण उपलब्धी प्राप्त भएको छ। ती समझदारी नेपालको हितमा छन्।

प्रधानमन्त्रीले ओलीले आफू र भारतका प्रधानमन्त्रीबीच भएको एक्लाएक्लै वार्ता सौहार्दतापूर्ण र फलदायी भएको पनि बताए। भारत सरकारले आफ्नो भ्रमणलाई राजकीय सम्मान दिएकोमा प्रधानमन्त्रीले भारत सरकार र भारतका राष्ट्रपति प्रणव मुखर्जीप्रति आभार व्यक्त गरे।

# भारतीय सेनाको हेलिकप्टरबाट उत्तराखण्ड पुगेका प्रम ओलीद्‌वारा टिहरी बाँध निरीक्षण

21st February 2016 | ९ फागुन २०७२ |

**नयाँ दिल्ली :** प्रधानमन्त्री केपी शर्मा ओली आज बिहान भारतको टिहरी बाँध अवलोकनका लागि पुगेका छन्। देहरादुन डेटलाइनबाट अमर उजालाले सार्वजनिक गरेको समाचार अनुसर त्यहाँ उनले ड्याम तथा पावर हाउसबारे जानकारी लिएका छन्।

प्रधानमन्त्री नेपाली समयअनुसार बिहान पौने ११ बजे भारतीय सेनाको हेलिकप्टरबाट नइँ टिहरी पुगेका थिए। त्यहाँबाट उनी ड्यामतिर लागेका हुन्। ड्यामसँगै उनले त्यहाँ जलविद्युत आयोजनाबारे बुझ्ने कार्यक्रम थियो।

ओलीको भ्रमणलाई लिएर हिजै देखि त्यहाँको जिल्ला प्रशासनले तयारी थालेको थियो। समाचारमा जनाइएअनुसार बिहान १०:३५ बजे उनलाई कोटी कोलोनीको हेलिप्याडमा उतारिउको थियो। अपरान्ह १ बजे उनी दिल्ली फर्कने कार्यक्रम छ।

उत्तराखण्ड सरकारको तर्फबाट मोदीलाई पर्यटन मन्त्री दिनेश धनैले स्वागत गरेका थिए। नेपालमा पञ्चेश्वर बाँध बनाउँदा हुने पुनर्वासको विषयलाई लिएर पनि उनी टिहरी बाँध अवलोकनका लागि आएका गएका। टिहर बाँध बनाउँदा आएका समस्या, पुनर्वासको प्रकृया बुझ्नु भ्रमणको मुख्य उद्देश्य हो।

नयाँ दिल्लीबाट ३ सय किलोमिटर दुरीमा रहेको टिहरी बाँध भगिरथी नदीमा बनाइएको छ। पहिलो चरणको काम २००६ मा सकिएको यो जलविद्युत आयोजनाबाट हाल १ हजार मेगावाट विद्युत उत्पादन भइरहेको छ। त्यस्तै दोस्रो चरणको काम पनि भइरहेको छ जसले थप १ हजार मेगावाट नै विद्युत उत्पादन गर्नेछ।

# दिल्लीमा प्रम ओलीलाई कालोझण्डा देखाउने नेपाली विद्यार्थी रिहा

21st February 2016 | ९ फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँदिल्ली** - भारतमा प्रधानमन्त्री केपी शर्मा ओलीलाई कालोझण्डा देखाएको अभियोगमा पक्राउ परेका नेपाली विद्यार्थी तिहाड जेलबाट रिहा भएका छन्।

नेपाल र भारतीय राजदूतावासको आग्रहमा उनीहरुलाई प्रहरीले रिहा गरेको हो। पक्राउ परेको तीन दिन दुई रातपछि उनीहरु आइतबार दिउँसो रिहा भएका हुन्।

काठमाडौंबाट दिल्ली उत्रिएलगत्तै प्रधानमन्त्री केपी शर्मा ओलीलाई भारतको इन्दिरा गान्धी अन्तर्राष्ट्रिय विमानस्थलमा मधेसी र थारु नेपाली विद्यार्थीले कालो झण्डा देखाएका थिए। त्यसको केही घण्टापछि यहाँस्थित दूतावासमा प्रजातन्त्र दिवसको अवसरमा आयोजित रात्रीभोज अघि समेत केही विद्यार्थीहरुले प्रदर्शनको तयारी गरेका थिए।

त्यस क्रममा १५ जना विद्यार्थीहरु बाराखम्बा रोडबाट पक्राउ परेका थिए। सुरुमा मन्दिर मार्ग थानामा राखिएको उनीहरुलाई शनिबार तिहाड जेल लगिएको पक्राउ परेका नेपाली विद्यार्थी सुरेन्द्र साहले जानकारी दिए।

# दिल्लीस्थित नेपाली दूतावासबाट प्रधानमन्त्री ओलीको सम्बोधन (लाइभ)

21st February 2016 | ९ फागुन २०७२ |

**नयाँ दिल्ली –** ६ दिने भारत भ्रमणमा रहेका केपी शर्मा ओली आफ्नो भ्रमणमा भएका प्रगतिबारे जानकारी दिँदैछन्। दिल्लीस्थित नेपाली दूतावासको पत्रकार सम्मेलनमा प्रधानमन्त्री ओली अहिले सम्बोधन गरिरहेका छन्। शनिबार भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीसँग उनले द्विपक्षीय वार्ता गरेका थिए। उनले आफ्नो भ्रमणका विषयमा पत्रकार सम्मेलनमा जानकारी गराइरहेका छन्। नेपाल-भारत सम्बन्धमा रहेको असमझदारी हटाउन आफ्नो भ्रमण सफल भएको ओलीले दावी गरेका छन्। सुन्नुस् अडियो लाइभ-

https://www.youtube.com/watch?v=WKvCpOY_4Rw

# दिल्लीमा प्रधानमन्त्री ओलीको प्रश्न- खै कहाँ गरेको छ संविधानले विभेद?

21st February 2016 | ९ फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली :** प्रधानमन्त्री केपी शर्मा ओलीले नेपालको संविधानले कसैलाई पनि भेदभाव नगरेको भन्दै नागरिकको चाहनाअनुसार संविधान परिवर्तन हुँदै जाने बताएका छन्।

६ दिने भारत भ्रमणका क्रममा तेस्रो दिन दिल्लीस्थित नेपाली दूतावासले आइतबार गरेको पत्रकार सम्मेलनमा संविधानले मधेसलाई विभेद गरेको बारे पत्रकारले सोधेको प्रश्नमा प्रधानमन्त्री ओलीले संविधानले कसैलाई पनि भेदभाव नगरेको बताए।

'कहाँ छ विभेद? कहीँ छ त्यस्तो? के नेपालको संविधानले कसैलाई भेदभाव गर्छ?', पत्रकार सम्मेलनमा पत्रकारले सोधेको प्रश्नको जवाफमा प्रधानमन्त्री ओलीले भने, 'नेपालको संविधानले धर्म, जात, भाषा, संस्कृति वा भौगोलिक क्षेत्र आदिका आधारमा कहाँ गरेको छ विभेद?'

विभेद संविधानमा नभइ विकासको समुचित वितरणमा रहेको बताए। 'समस्या संविधानमा होइन, आर्थिक विकासको वितरणमा हो, यसमा कोही पनि भ्रममा रहनु जरुरी छैन।'

नेपालको संविधानले सबै खालका भेदभाव अन्त्यको घोषणा गरेको स्पष्ट पार्दै प्रधानमन्त्रीले 'सेन्टिमेन्ट' फरक कुरा भएको बताए। 'सेन्टिमेन्ट फरक कुरा हो, सेन्टिमेन्ट पनि बास्तविक धरातलमा हुनुपर्छ', उनले भने।

संविधानमा राज्यको मूलप्रवाहबाट पछि पारिएका वर्ग, क्षेत्र र तहलाई समेट्न संविधानमा विशेष व्यवस्थाहरु रहेको उल्लेख गर्दै प्रधानमन्त्रीले संविधानमा सुधार गर्न सकिने व्यवस्था पनि रहेको बताए।

प्रधानमन्त्रीले मधेसी, थारु, जनजाति, दलितका समस्या अध्ययन गरेर सुझाव दिन समिति गठन भएकोले त्यसको सुझावको आधारमा संसदले सम्बोधन गर्ने उनले बताए।

# दिल्ली दुतावासमा नेपाली समुदायसँग प्रधानमन्त्री (लाइभ)

21st February 2016 | ९ फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली –** ६ दिने भारत भ्रमणमा रहेका केपी शर्मा ओली दिल्लीस्थित नेपाली दूतावासमा अहिले नेपाली समुदायसँग अन्तरक्रिया गर्दै हुनुहुन्छ। शनिबार भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीसँग उनले द्विपक्षीय वार्ता गरेका थिए। उनले अहिले नेपाली समुदायसँग अन्तरक्रिया गर्न लाग्नु भएको हो। सुन्नुस् दिल्ली दुतावासबाट अडियो लाइभ-
https://www.youtube.com/watch?v=hpVhVU4utXc

# दिल्लीमा प्रम ओलीको दिल्लगी : गानादेखि ग्याससम्म

21st February 2016 | ९ फागुन २०७२ |

- **उमेश श्रेष्ठ -**

**नयाँ दिल्ली :** प्रधानमन्त्री केपी शर्मा ओली आफ्नो दिल्ली भ्रमणबारे मिडियालाई ब्रिफ गर्न आइतबार अपराह्न बाराखम्बास्थित नेपाली दूतावासमा थिए। प्रम ओलीको महत्त्वपूर्ण बोली कभर गर्न आएका पत्रकारहरु संविधान घोषणाबारे लामो पृष्ठभूमि सुनेर दिक्क हुन नभ्याउँदै दिल्लगी सुनेर हाँस्दै बसे।

## गाना सुनाएर गम्भीर कुरा

'मैनें एक गाना सुना था- कोइ तो बतादे हमें,' प्रधानमन्त्री ओलीले गाना सुनाउँदै गम्भीर कुरा गरे, हवेयर इज दि डिस्क्रिमिनेसन? संविधानको कुन धारामा विभेद छ? मलाई देखाइदिनुस्। उनले कुनै पनि विभेद नभएको प्रष्ट्याउँदै केही कन्फ्युजन छ भने त्यो हटाउन आग्रह गरे। केही छ भने देखाइदिए संशोधन गर्न आफूहरु खुल्ला रहेको पनि उनले उद्घोष गरे।

"सेन्टिमेन्ट्स भनेका फरक कुरा हुन्। तर त्यसलाई रियालिटी र फ्याक्टसँग जाँचेर हेर्नुपर्छ", प्रश्न सोध्ने भारतीय पत्रकारलाई उनले भने।



## आशा जगाउन ग्यासको कुरा

प्रधानमन्त्री केपी ओलीले घर-घरको चुल्होमा ग्यास पुऱ्याउने भनी दिएको आश्वासन भारतसम्म पनि पुगेको रहेछ। एक भारतीय महिला पत्रकारले सोधिहालिन्- के त्यसका लागि ग्यास पाइपलाइनको योजना बनाउनु भयो? प्रधानमन्त्रीले जवाफ दिए-'हो, हामीले त्यतिबेला ग्यासको एकदमै अभावको सामना गर्नुपरेको अवस्था थियो। त्यही परिप्रेक्ष्यमा मैले अहिलेको यस्तो प्रविधिको विकास भएको अवस्थामा काँधमा ग्यास बोक्नु नपर्ने भनेको हुँ'

कसरी भन्ने प्रश्नलाई सम्बोधन गर्दै उनले भने, आइ विल म्यानेज इट। आइ विल डु इट।

तर फेरि उनले त्यो खासमा गफमात्र भएको संकेत गरे, 'उनीहरुले भोग्नुपरेको समस्यालाई बुझ्न मात्र त्यसो भनेको हुँ। नत्र निराशावादी हुन्छन्। मैले आशा जगाउन (अप्टिमिजम इन्क्रिज गर्न) त्यसो भनेको हुँ।'




## १२५ दिन किन लाग्यो? लाग्यो त लाग्यो के गर्ने अब?

नेपाली पत्रकारलाई भन्दा भारतीय पत्रकारलाई प्रश्न सोध्न दिइएको पत्रकार सम्मेलनमा अर्का भारतीय पत्रकारले सोधे, यो नाकाबन्दी हटाउन १२५ दिन किन लाग्यो?

प्रधानमन्त्रीले प्रश्न सोध्ने पत्रकारलाई नै सिल्ली बनाउँदै जवाफ दिए- 'यो कदम जरुरी थिएन, उचित थिएन। एक दिन नै काफी थियो। तर १२५ दिन लाग्यो। लाग्यो त लाग्यो अब के गर्ने ! हामीले समयलाई पछि सार्न मिल्दैन'

हलमा हाँसो गुन्जियो।

## एक्लाएक्लै भेट एक्लाएक्लैका लागि भएको

अर्को पटक हाँसो तब गुन्जियो जब उनलाई भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीसँग वन टु वन मिट (एक्लाएक्लै भएको भेट) बारे प्रश्न सोधियो। 'वन टु वन मिटिङ वन टु वन मिटिङका लागि भएको हो। कोही पनि त्यहाँ थिएन। वरिष्ठ मन्त्रीहरु पनि त्यहाँ थिएनन्', उनको जवाफ थियो।

## तँलाई मार्दिन्छु भन्नुको अर्थ साँच्चिकै मार्छु भनेको होइन

अर्को एक भारतीय पत्रकारले नेपालका मधेसीको समस्यालाई भारतले श्रीलंकाको जाफ्नाको जस्तो स्थिति आउँछ भनेर हेरेको बारे प्रश्न सोधेकी थिइन्। उनले जवाफ दिए, 'यो भूमिमा परम्परादेखि नै अतिरञ्जना गर्ने चलन छ। धार्मिकदेखि साहित्यमा सम्म पनि अतिरञ्जित गरिन्छ। म तँलाई मार्दिन्छु भन्नुको अर्थ साँच्चिकै मार्छु भन्ने हुँदैन। यो एउटा असन्तुष्टि पोख्ने माध्यम हो। यस्ता छोटामोटा कुराहरुलाई छाडेर जानु उचित हुन्छ। एक एकको हिसाब लिन थालियो भने राम्रो हुँदैन।

## 'मलाई भारतीय शिक्षकले नै पढाएको'

मधेसका भारतीय शिक्षकलाई हटाइएको बारे एक भारतीय पत्रकारले प्रश्न सोध्दा अरु भारतीय पत्रकारहरु नै असन्तुष्ट देखिन्थे, 'ह्वाट अ वेस्ट अफ टाइम' भन्दै थिए। तर प्रधानमन्त्रीले त्यसको पनि जवाफ दिए, 'मधेस हैन तराई भनिँदा नै नेपालमा भारतीय शिक्षकशिक्षिकाहरुले पढाउँदै आएका छन् त्यसमा कुनै समस्या छैन। म भाग्यमानी छु कि मलाई पनि स्कूलमा भारतीय शिक्षकले नै पढाएका थिए।'

## र, गम्भीर कुरा

दिल्लीबाट उत्तराखण्ड र उत्तराखण्डबाट दिल्लीसम्मको दिनभरको कार्यक्रमले थाकेका जस्ता देखिने प्रधानमन्त्री ओलीले आफू असमझदारी हटाउन भारत आएको र भ्रमण निकै सफल भएको जिकिर गरे। उचित चासोलाई सम्बोधन गर्न आफूहरु तयार रहेको बताउँदै उनले छिमेकीको संवेदनशीलतालाई ध्यानमा राख्ने बताए।

कार्यक्रमको पहिलोपोस्टले नयाँ दिल्लीबाट लाइभ अडियो प्रसारण गरेको थियो। सुन्नुस् त्यसैको रेकर्ड- https://www.youtube.com/watch?v=WKvCpOY_4Rw

# दूतावासभित्रै भारतसित युद्ध जितेको उद्घोष, उन्मादी भाषण प्रम र मन्त्रीहरुले सुनिरहे

21st February 2016 | ९ फागुन २०७२ |

- **उमेश श्रेष्ठ -**

**नयाँ दिल्ली :** 'यो सरकारले बिना हतियारको लडाइँ लडेर युद्ध जितेको छ', भारतको राजधानी नयाँ दिल्लीस्थित बाराखम्बा रोडमा रहेको नेपाली दूतावास परिसरभित्र माइकमा चर्को आवाजमा भाषण भइरहेको थियो।

प्रधानमन्त्री केपी ओली आफ्नी धर्मपत्नी राधिका शाक्यसहित त्यहाँ उपस्थित थिए। उपप्रधानमन्त्री तथा परराष्ट्र मन्त्री कमल थापा, अर्थमन्त्री विष्णु पौडेल र गृहमन्त्री शक्ति बस्नेतकै उपस्थितिमा हीरासिंह चन्द स्वागत मन्तव्यका क्रममा अगाडि भन्दै थिए, 'आवाजको हतियारले युद्ध जितेको छ सरकारले।'

कुटनीतिक परिसरभित्र आतिथ्य प्रदान गर्ने राष्ट्रसित 'युद्ध लडेर जितेको' भनाई राखिरहँदा प्रधानमन्त्री वा मन्त्रीगणले त्यसलाई रोक्न आवश्यक ठानेनन्। शायद् केही क्षणअघिसम्मको 'केपी ओली जिन्दावाद, जिन्दावाद'को चर्को नाराले अहिलेको चर्को भाषणलाई छाँयामा पारेको हुनसक्छ।

त्यति मात्र कहाँ हो र, दूतावास परिसरमा भारतस्थित नेपाली संस्थाहरुको आयोजनामा भएको स्वागत तथा सम्मान कार्यक्रममा पुष्पवृष्टि गरिएको थियो। शुक्रबार प्रधानमन्त्री दिल्ली उत्रेकै दिन रिसेप्सनका लागि तयार पारिएको रातो कार्पेटमा हिँड्दै गर्दा भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीको नाममा 'मोदी-मोदी' गरी लगाइने नाराकै शैलिमा उनका समर्थकहरुले 'ओली-ओली' को नारा लगाएका थिए।

जनमोर्चाका हीरासिंह चन्दले स्वागत मन्तव्यका क्रममा 'युद्ध जित्ने सरकार' भनेर उन्माद देखाए पनि केही अघिसम्म नेपाली राजदूत दीपकुमार उपाध्याय पत्रकार सम्मेलनमा आग्रह गर्दै थिए, 'म तपाईंहरु सबैलाई आग्रह गर्छु, नेपाल र भारतको सम्बन्धप्रति संवेदनशील भइदिनुस्। कुनै त्यस्तो कुरा हुन नदिनुस् जसले मित्रतामा थोरै पनि असर पुऱ्याओस्।'

तर दूतावास परिसरबाटै चर्को उन्माद पोखिँदै थियो।

प्रधानमन्त्री ओली भने त्यति भावनात्मक भएनन्। न पत्रकार सम्मेलनमा जस्तो उनले सहभागीलाई हँसाए। उनले नहुनुपर्ने असमझदारीको स्थिति देखापरेको र त्यसैलाई अन्त्य गर्ने प्रयासको रुपमा अहिले भारत भ्रमण गरेको स्पष्ट पारे।

भारत सरकारले देखाएको आत्मीयता, सार्वभौम र स्वतन्त्र राष्ट्रका रुपमा गरेको सम्मानमा खुसी व्यक्त गर्दै प्रधानमन्त्री ओलीले भारतीय राष्ट्रपतिले आफ्नै निवासमा आवासको व्यवस्था गरेकोमा धन्यवाद दिए।

भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीसित लामो समय एक्लाएक्लै कुरा भएको र धैरै सकारात्मक कुरा भएको उनले जानकारी दिए।

उनले सम्बोधनका क्रममा भूकम्पको कुरा गरे। भूकम्पपछिको पुनर्निर्माणका कुरामा सबभन्दा धैरै धरहरालाई सम्झिए। उनको भाषण सुन्दा लाग्थ्यो धरहरा नै नेपालको एकमात्र गौरव हो, इतिहास हो। जनताको घरको

कुरा त्यहाँ उठेन। काठमाडौंको नाम राख्ने मौलिक सम्पदा काष्ठमण्डप जगमात्र रहने गरी भत्किएकोमा हैन मुगल शैलिको धरहरा भत्किएकोमा सरकारलाई बढी चिन्ता लागेको देखिन्थ्यो
उनले मेरो धरहरा म आफै बनाउँछु भन्ने अभियान सुरु गरिएको जानकारी दिँदै देशविदेशबाट स्वेच्छिक चन्दा संकलन सुरु गरिएको भन्दै भारतमा बसेका नेपालीलाई पनि सहयोगको आह्वान गरे।

८० मेगावाटको बिजुली किनेर त्यसलाई मुजफ्फरपुर ढल्केबर प्रसारण लाइनमार्फत् नेपाल भित्र्याउने कामको स्विच थिचेर उद्घाटनको नाटक गरिएको यथार्थ अघि रहँदारहँदै पनि उनले घोषणा गरे, 'दुई वर्षभित्र नेपालले बिजुली निर्यात गर्ने अवस्था आउनेछ।'

निर्यात गर्न सके पनि नसके पनि २२ महिनाभित्र सोही प्रसारण लाइनबाट ६०० मेगावाट बिजुली भारतबाट आयात गर्ने क्षमताको भने पक्कै पनि भइसक्नेछ।

कार्यक्रमको नयाँ दिल्लीबाट पहिलोपोस्टले प्रत्यक्ष अडियो प्रसारण गरेको थियो। त्यसैको रेकर्ड-
https://www.youtube.com/watch?v=hpVhVU4utXc

# दिल्लीमा चौथो दिन यस्ता छन् प्रधानमन्त्री ओलीको कार्यक्रम

21st February 2016 | ९ फागुन २०७२ |

**काठमाडौं :** ६ दिने भारत भ्रमणमा रहेका प्रधानमन्त्री केपी शर्मा ओलीले राजनीतिक भेटवार्ता सकेर आजदेखि ब्यापारिक भेटवार्ता गर्दैछन्।

यसअघिका तीन दिन भारतका राष्ट्रपति, उपराष्ट्रपति, प्रधानमन्त्री, मन्त्रीहरु र बिभिन्न दलका नेता भेटेका ओलीले आज चौथो दिनदेखि ब्यापारिक भेटवार्ता गर्न लागेका हुन्।

आज प्रधानमन्त्री केपी शर्मा ओलीको चारवटा कार्यक्रम तय भएको छ। बिहान साढे ९ बजे प्रधानमन्त्री ओलीले राष्ट्रपति भवनमा भारतीय उर्जा राज्यमन्त्री पियुस गोयलसँग भेटवार्ता गर्दैछन्।भेटवार्तामा नेपाल र भारतको उर्जा साझेदारी लगायतका विषयमा छलफल हुनेछ।

प्रधानमन्त्री ओलीकै भ्रमणको क्रममा भारतले नेपाललाई ८० मेगावाट विजुली दिन सुरु गरेको छ। आउँदो अक्टोबरसम्म थप २ सय मेगावाट र करिब २ वर्षभित्र ६ सय मेगावाट विजुली दिने सहमति प्रधानमन्त्री ओली र भारतीय समकक्षी नरेन्द्र मोदीबीचको भेटमा शनिबार नै भएको थियो।

आजै बिहान ११ बजे प्रधानमन्त्री ओलीले भारतको सप्रु हाउसमा आयोजित कार्यक्रममा कुटनितिज्ञहरुलाई संबोधन गर्ने कार्यक्रम रहेको छ। त्यस्तै दिउँसो ३ बजे उनी विवेकानन्द फाउण्डेसनमा जानेछन् भने ४ बजे होटल ताजमा आयोजित कार्यक्रममा भारतका ब्यापारिक समुदायलाई संबोधन गर्नेछन्।

ओलीले संविधान जारी भएपछि नेपाल आर्थिक विकासमा लागेको भन्दै भारतीय ब्यापारीहरुलाई लगानीका लागि आग्रह गर्ने भ्रमणअघि नै बताइसकेका थिए।

# दिल्लीमा प्रधानमन्त्रीको कुटनीतिज्ञलाई सम्बोधन (लाइभ)

22nd February 2016 | १० फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली –** ६ दिने भारत भ्रमणमा रहेका प्रधानमन्त्री केपी शर्मा ओलीले अहिले कुटनीतिक नियोगका अधिकारीसँग अन्तरक्रिया गर्दैछन्। सप्रु हाउसमा इण्डियन काउन्सिल अफ वर्ल्ड अफेयर्सले आयोजना गरेको कुटनीतिक निगोगका अधिकारीहरुलाई नेपालको पछिल्लो राजनीतिक अवस्थाबारे जानकारी दिदैँछन्।

कार्यक्रमको अध्यक्षता भारतीय विदेश मन्त्री सुष्मा स्वराजले गरिरहेकी छिन्। साथै प्रधानमन्त्री ओलीले नेपाल - भारत सम्बन्ध र नेपालमा हालै जारी भएको संविधानका बारेमा समेत जानकारी गराउन लागेका हुन्। कार्यक्रममा भारतीय कुटनीतिज्ञहरुको बाक्लो उपस्थिति रहेको छ। ओलीले आफ्नो भ्रमण नेपाल-भारत सम्बन्धमा रहेको असमझदारी हटाउन सफल भएको दावी गरेका छन्। सुन्नुस् अडियो लाइभ- https://www.youtube.com/watch?v=avj7pCFPPIU

# दिल्लीमा प्रम ओलीले दिए जवाफ : संविधानपछि १ हजार भारतीयले अंगिकृत नागरिकता पाइसके

22nd February 2016 | १० फागुन २०७२ |

- **उमेश श्रेष्ठ –**

**नयाँ दिल्ली :** भारतीय पक्षले सँधै उठाउँदै आएको नेपालको नागरिकताको विषयलाई प्रधानमन्त्री केपी शर्मा ओलीले आज प्रस्ट्याउने कोशिस गरे। उनले संविधान लागू भइसकेपछिका 'प्रगति'मा नागरिकताको विषयसमेत रहेको तथ्य अघि सारे।

नयाँ दिल्लीमा आज इन्डियन काउन्सिल अफ वर्ल्ड अफेयर्समा आयोजित प्रवचन कार्यक्रममा प्रधानमन्त्री ओलीले नेपालको संविधानका विशेषताको व्याख्या गर्दै उठाइएका प्रश्नको जवाफ मात्रै दिएनन्, भारतीय डिप्लोमेटलाई उनीहरुकै मुलुकको उदाहरण दिएर संघीयताको सीमाङ्कनबारे पनि प्रस्ट्याए।

ओलीको प्रवचनपछि भारतीय सेनाका पूर्व जनरल अशोक मेहताले सोधे : नागरिकताको विषयमा सरकार-सरकार तहमा मिस अन्डर्स्ट्यान्डिङ छ। जनताको लेभलमा यसको के छ स्थिति?

'फर्म'मा रहेका प्रधानमन्त्री ओलीले जवाफ दिए, 'मिस अन्डर्स्ट्यान्डिङ द्याट कज्ड बाइ दी ल्याक अफ अन्डर्स्ट्यान्डिङ' अर्थात् बुझ्न नसक्दा गलत बुझाई भयो।

उनले केही तथ्यहरु नै अघि सारे जसले भारतीय पक्षले नागरिकतामाथि उठाउँदै आएको प्रश्नको निवारण गर्थ्यो। भारतीय मिडियामा संविधानले बिहे गरेर नेपाल जाने महिलाले नागरिकता नै नपाउने अवस्था आएको टिप्पणी हुँदै आएको थियो। राजनीतिक दलका नेताहरुले त्यसैलाई आधार मानेर प्रश्न उठाउँदै आएका थिए। स्थिति यतिसम्म बनेको थियो कि भारतको लोकसभामा विदेश मन्त्री सुषमा स्वराज स्वयमले नागरिकताको इस्यु उठाएकी थिइन्।



प्रधानमन्त्रीका अन्तर्राष्ट्रिय मामिला विज्ञ गोपाल खनालको फेसबुकबाट

आज सुषमा स्वराजकै अघिल्तिर प्रधानमन्त्री ओलीले भने, 'संविधान जारी भएको तीन महिनामा नेपाल बिहे गरेर जाने ५ सय ९६ भारतीय महिलाले अंगिकृत नागरिकता लिएका छन्। चौथो महिना पुग्दा यो संख्या १ हजार ७५ पुगेको छ।' मेहताको प्रश्नमा उनले सरकारको तहमा यसबारे गलत बुझाइ रहेको भएपनि जनस्तरमा कुनै समस्या नरहेको प्रस्ट्याए।

कुनै पनि मुलुकमा नागरिकता केन्द्रीय कानुनअनुसार नै हुने गरेको बताउँदै ओलीले नेपालमा मधेसी मोर्चाले राखेको माग अनुसार संघीय कानुन अनुसार नागरिकता वितरण कतै पनि हुने नगरेको बताए।

भारत भ्रमणको अघिल्लो दिन सीमाङ्कन सुल्ट्याउन गठित संयन्त्रमाथि एकतर्फी भएको भन्दै सोधिएको प्रश्नमा ओलीले भने, 'वि आर रेडी टू एड्रेस (यसलाई हामी सम्बोधन गर्छौं)।' उनले संयन्त्रको अध्यक्ष र सदस्य संख्यामात्र घोषणा भएको पनि बताए।

सीमाङ्कनको विषयमा भारतीय उदाहरणबाटै भारतीय कुटनीतिज्ञहरुलाई जवाफ फर्काए उनले। 'संविधान जारी भएको यति लमो समयपछि भारतमा आन्ध्र प्रदेशबाट तेलङ्गना छुट्टियो,' ओलीले उनीहरुकै उदाहरण पेश गर्दै

भने, 'सीमाङ्कन भनेको स्थिर रहन्न फेरिन्छ भन्ने यसले देखाउँछ। हाम्रोमा पनि यो परिवर्तन हुनसक्छ। संविधान जारी गर्दा जे थियो सधैं त्यही हुने भन्ने होइन।'

# '११ बुँदे माग पूरा गर' भन्दै नेपाली दूतावास अगाडि धर्ना

22nd February 2016 | १० फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली :** नेपालको संविधानमाथि भारतीय कुटनीतिज्ञलाई प्रधानमन्त्री केपी शर्मा ओलीले प्रवचन दिइरहँदा यता दिल्लीस्थित नेपाली राजदूतावासअघि भारत-नेपाल मैत्री संघले धर्ना दिइरहेको छ। संयुक्त लोकतान्त्रिक मधेसी मोर्चाले अघि सारेका ११ बुँदे माग पूरा गर्न भन्दै संघका कार्यकर्ता धर्नामा सहभागी भएका छन्।

नेपालको मधेसको आन्दोलनलाई समर्थन गर्दै उनीहरुले आज एक दिने धर्ना कार्यक्रम गरेका हुन्। हेर्नुस् धर्नाका दृष्यहरु :



## ओलीको बर्थ डेमा मोदीले के पठाए 'गिफ्ट'?

22nd February 2016 | १० फागुन २०७२ |

**नयाँ दिल्ली :** प्रधानमन्त्री केपी शर्मा ओलीको आज परेको ६५ औं जन्म दिनको अवसरमा भारतका प्रधानमन्त्री नरेन्द्र मोदीले बधाईं तथा शुभकामना दिएका छन्।

राष्ट्रपति भवनमा प्रधानमन्त्री मोदीले भारतका आयुष राज्यमन्त्री श्रीपद यस्व नायक र राष्ट्रिय सुरक्षा सल्लाहकार अजित डोभलमार्फत प्रधानमन्त्री ओलीलाई पुष्प गुच्छा पठाई शुभकामना र बधाई दिएका हुन्। प्रधानमन्त्री ओली◌ेले उनीहरुमार्फत नै प्रधानमन्त्री मोदीलाई धन्यबाद दिएका प्रेस सल्लाहकार प्रमोद दाहालले जानकारी दिए।

सोमबार नै नयाँदिल्लीमा विश्व मामिलाका लागि भारतीय परिषदले आयोजना गरेको कार्यक्रममा भारतका विदेश मन्त्री सुष्मा स्वराजले पनि प्रधानमन्त्री ओलीलाई जन्म दिनको शुभकामना दिइन्। प्रधानमन्त्री ओलीसँग आजै भारतका उर्जा राज्य मन्त्री पियुष गोयलले शिष्टाचार भेट गरेका छन्।

## दिल्लीमा केक काटेर मनाए प्रम ओलीले वर्थडे

22nd February 2016 | १० फागुन २०७२ |

**काठमाडौं :** प्रधानमन्त्री केपी शर्मा ओलीको जन्मदिन यसवर्ष संयोगले भारत भ्रमणका क्रममा पर्‍यो। प्रधानमन्त्री भएपछि पहिलो विदेश भ्रमण भारतबाट सुरु गरेका उनले भ्रमणको चौथो दिनमा नयाँदिल्लीमा नै ६५ औं जन्मदिन मनाउन पुगे।

उनको जन्मदिन र विवाहको वर्षगाँठको अवसरमा विशेष कार्यक्रम नै गरियो। समारोहमा प्रधानमन्त्री पत्नी राधिका शाक्य, नेपाली भ्रमण टोलीमा सामेल उपप्रधानमन्त्री कमल थापा, अर्थमन्त्री विष्णु पौडेल, गृहमन्त्री शक्तिबहादुर बस्नेत, मुख्य सचिव सोमलाल सुवेदी, नेपाल उद्योग वाणिज्य संघका अध्यक्ष पशुपति मुरारका लगायतका उद्योगी व्यवसायी पनि सामेल थिए।

प्रधानमन्त्री ओलीले केक काटेर सबैलाई खुवाएर खुशियाली मनाएका थिए।

हेर्नुस् फोटोहरु





# भारतका व्यवसायीमाझ प्रम ओलीको सम्बोधन : लाइभ सुन्नुस्

22nd February 2016 | १० फागुन २०७२ |

**नयाँ दिल्ली :** प्रधानमन्त्री केपी शर्मा ओली भारत भ्रमणको तेस्रो दिन दिल्लीको होटल ताजमा त्यहाँको व्यापारिक समुदायलाई सम्बोधन गर्दै नेपालमा लगानीका सम्भावनाबारे व्याख्या गरेका छन्।

उनले हाइड्रो, पर्यटन लगायतका क्षेत्रमा लगानी गर्न भारतीय निजी क्षेत्रलाई आग्रह गरेका थिए। । नेपालमा भूकम्प पछिको अवस्था र नेपाल-भारत लगानी र व्यापारका विषयमा उनले बोल्ने कार्यक्रम छ। सुन्नुस् कार्यक्रमको लाइभ :

PahiloPost is on Mixlr

# नेपालमा आउन भारतीय लगानीकर्तालाई प्रम ओलीको निम्तो

22nd February 2016 | १० फागुन २०७२ |

- **उमेश श्रेष्ठ/पहिलोपोस्ट-**

**नयाँदिल्ली** : नेपालमा लगानी गर्न प्रधानमन्त्री केपी शर्मा ओलीले भारतीय लगानीकर्तासँग आव्हान गरेका छन्। सोमवार नयाँदिल्लीको ताज होटलमा आयोजित कार्यक्रममा प्रधानमन्त्री ओलीले नेपालमा गरेको लगानीबाट राम्रो प्रतिफल प्राप्त गर्न सकिने समेत बताए।

प्रधानमन्त्री ओलीले नेपालमा भारतीय कम्पनी डाबर, युनिलिभर जस्ता कम्पनीले राम्रो मुनाफा गरेको समेत बताए। उनले लगानीकर्तालाई नेपाली र भारतीय भनेर विभेद नगरिने समेत बताए। प्रधानमन्त्री ओलीले नेपालमा कर सुविधा, भारतीय बजार तथा अल्पविकसित मुलुकका रुपमा नेपालले तेस्रो मुलुकसँग पाउने सुविधालाई उपयोग गर्न समेत भारतीय लगानीकर्तालाई आव्हान गरे।

प्रधानमन्त्री ओलीले नेपालले संविधान बनाएर राजनीतिक मुद्दा पूरा गरेको तथा त्योसँगै शान्ति प्रक्रिया पनि पूरा भएको जानकारी दिए। 'नेपालले अब चाहेका दुई विषय हुन् विकास र समृद्धि त्यसका लागि लगानी

आवश्यक छ, र यो एजेण्डामा सबै राजनीतिक दल एक ठाउँमा छन्,' उनले भने।

समृद्धिका लागि विदेशी लगानी आवश्यक हुने र त्यसका लागि भारतीय लगानीकर्तालाई नेपालबाट प्राकृतिक रुपमा तुलनात्मक लाभ समेत हुने उनले बताए । प्रधानमन्त्री ओलीले भने, 'म तपाईलाई भन्छु नेपालका लागि तपाई चाहिएको छ र तपाईलाई हामी सहुलियत दिन चाहन्छौं।'

प्रधानमन्त्री ओलीले सरकार लगानीकर्ताका लागि सहजकर्ता मात्रै भएको समेत बताए। उनले नेपालमा गरेको लगानीबाट भारत सहज व्यापार गर्न सकिने समेत बताए। 'मेरो यस पटककै भ्रमणमा समेत नेपाल र भारतवीच पारवहन सुविधाका लागि चार वटा सम्झौता भएका छन्,' उनले भने।

प्रधानमन्त्री ओलीले नेपालमा करको दरहरु सहुलियतपूर्ण रहेको तथा लगानीका लागि प्रशासनिक प्रक्रिया सजह भएको समेत बताए। नेपालमा लगानीकर्ताका लागि सरल र सहज ढंगबाट भिषा प्राप्त हुन्छ, त्यसमाथि भारतीय लगानीकर्तालाई भिषा समेत चाहिंदैन्,' उनले बताए।

'नेपालमा मुनाफा गरेपछि त्यसको प्रतिफल बाहिर लैजानका लागि कुनै बाधा हुनेछैन्,' प्रधानमन्त्री ओलीले भने, 'विदेशी कम्पनीलाई नेपालमा सम्पत्ती किन्न र बेच्ने सुविधा समेत छ।' नेपाल र भारतवीच दोहोरो कर उन्मुक्तीको सम्झौता भएको भन्दै त्यसको फाइदा लिन समेत उनले लगानीकर्तालाई आग्रह गरे।

'नेपाल र भारतबीच खुला सीमाना छ, र हामीले ती सीमा नजिक विशेष आर्थिक क्षेत्र निर्माण गरिरहेका छौं, भारतीय लगानीकर्ताका लागि त्यो एउटा फाइदा हुन सक्छ,' प्रधानमन्त्री ओलीले भने।

प्रधानमन्त्री ओलीले ठूला पूर्वाधार परियोजनामा निजी र सार्वजनिक लगानीलाई प्रवर्दन गरिरहेको बताउँदै नेपालमा वर्कफोर्सको कुनै कमी नभएको तथा श्रम शक्तिको मूल्य समेत कम भएको बताए। प्रधानमन्त्री ओलीले नेपालमा लगानीका लागि जलविद्युत परियोजना पहिलो प्राथमिकता हुनसक्ने बताए। 'अपर कर्णाली अरुण तीनमा भारतका ठूला लगानीकर्ताले लगानी गरिरहेका छन्। त्यसबाहेक पनि थुप्रै परियोजनामा भारतीय लगानी आउन सक्छ,' उनले भने ।

प्रधानमन्त्री ओलीले नेपालमा पर्यटन पूर्वाधारका लागि समेत लगानी चाहिएको बताए। 'भारतबाट आउने पर्यटक बढेका छन्,' उनले भने, 'पर्यटनमा पूर्वाधार महत्वपूर्ण हो। त्यसका लागि हामीले दुई वटा क्षेत्रीय विमानस्थल समेत निर्माण गरिरहेका छौं।'

कार्यक्रममा नेपाल उद्योग वाणिज्य महासंघका अध्यक्ष पशुपति मुरारकाले भारतसँग नेपालको दुई तिहाइ व्यापार हिस्सा भएको बताए। उनले पनि नेपालमा लगानी गर्न भारतीय लगानीकर्तालाई आग्रह गरे।

# लगानी बोर्डका सिइओको नयाँ काम : सांसद भानुभक्त ढकालका अनुवादक

22nd February 2016 | १० फागुन २०७२ |

स्थान : विवेकानन्द फाउन्डेसन, चाणक्यपुरी, नयाँ दिल्ली
कार्यक्रम : नेप्लिज बिजनेस एन्ड ट्रेड डेलिगेसनसित अन्तर्क्रिया

आठ जना सांसदसहित लगानी बोर्डका सिइओ डा. राधेश पन्त र राष्ट्रिय पुनर्निर्माण प्राधिकरणका सिइओ सुशील ज्ञवाली दिउँसो ३ बजेको कार्यक्रमका लागि आइपुगे।

भन्नलाई बिजनेस एन्ड ट्रेड डेलिगेसन भनिए पनि बिजनेसको नाममा नेपाली टोलीमा डा. पन्तमात्रै सम्बन्धित व्यक्ति थिए। उतातिर भारतको सहभागी टिममा पनि अधिकांश पूर्व सैनिक थिए। बाँकी राजदूत र विदेश मन्त्रालयका अधिकारी।

राजन भट्टराई नेतृत्वको टोलीलाई स्वागत गर्दै भारतीय टोलीका तर्फबाट फाउन्डेसनका अध्यक्ष जनरल एनसी भिजले भनाई राखे। नेपाली टोलीका तर्फबाट केही भन्न आग्रह गर्दा टोली सुरुमै अलमलियो। एमाले सांसद भानुभक्त ढकालले सुरु मै नेपालीमा कुरा गर्ने कि भनेर प्रस्ताव गरे। पछि त्यहीँ भएको सल्लाह अनुसार एमालेकै सांसद राजन भट्टराईलाई बोल्न लगाइयो। उनले संविधानको विषयमा अङ्ग्रेजीमा अलि लामै बोले।

उनको भनाई सकिएपछि एमालेकै सांसद लालबाबु राउत बोल्न खोज्दै थिए, भारतीय पक्षको बोल्ने पालो भन्दै रोकियो। त्यसपछि राउतले आफ्नो भनाई राखे। उनको भनाई पनि राजनीतिक नै थियो।

कार्यक्रमको अन्त्यतिर एमाले सांसद भानुभक्त ढकालले बोल्ने इच्छा गरे। भारतीय टोलीका तर्फबाट तपाईँहरुलाई जे सजिलो लाग्छ त्यसैमा बोल्नु भए हुन्छ, हिन्दीमा बोल्दा पनि हामी अधिकांश बुझ्छौँ भनियो।

तर एमाले सचेतक समेत रहेका ढकालले हैन मलाई नेपालीमा नै सजिलो हुन्छ भनेर नेपालीमा भनाई राखे।

उनको नेपाली भनाईलाई अनुवाद गर्ने जिम्मा पाए लगानी बोर्डका सिइओ डा. पन्तले।

ढकालले एक लाइन नेपालीमा बोल्ने, पन्तले त्यसलाई अङ्ग्रेजीमा उल्था गर्ने। फेरि ढकालको एक लाइन, पन्तको अनुवाद।

अडियो सुन्नुस्-

https://www.youtube.com/watch?v=gBXRsUtFeuI

# को हुन् 'सुष्मिता' स्वराज, सुशील 'ग्वाली' र सोमलाल 'सुबुद्धि' ?

22nd February 2016 | १० फागुन २०७२ |

**नयाँ दिल्ली :** नेपाल र भारत नजिकका छिमेकी हुन्। परम्परागत सांस्कृतिक सम्बन्ध छ दुई देशबीच : दुवै देशका नेतादेखि नागरिकसम्मले बारम्बार दोहोर्‍याउने वाक्य हुन् यी।

तर जतिसुकै नजिकको सम्बन्ध भए पनि दुई देशका नागरिकको नाम जतिसुकै समान भएको जस्तो हामीलाई लागे पनि केही नाममा भने उच्चारणमा गल्ती भइहाल्ने रहेछ।

सोमबार होटल ताज प्यालेसमा आयोजित भारतीय उद्योगी व्यापारीहरुका तीन संस्थाले आयोजना गरेको कार्यक्रममा त्यस्तै गल्ती उच्चारण भएका फन्नी नाम सुन्न पाइयो।

राष्ट्रिय पुनर्निर्माण प्राधिकरणका सिइओ सुशील ज्ञवालीले पुननिमार्णसम्बन्धी आफ्नो प्रस्तुति राख्ने क्रममा भारतीय विदेश मन्त्री सुषमा स्वराजलाई सुस्मिता स्वराज भनिदिए।

त्यसो त कार्यक्रम उद्घोषकले सिइओलाई भारतको पुनर्निर्माण प्राधिकरणका भनेर गल्ती गरिसकेका थिए। उनको नाम ठीकै उच्चारण गरे पनि थर भने ज्ञवालीबाट 'ग्वाली' भइदियो।

नामको उच्चारणमा भएको अर्को गल्ती थियो मुख्य सचिव सोमलाल सुवेदीको। उनको नाम उद्घोषकले उच्चारण गरे- सोमलाल सुबुद्धि !

# राष्ट्रपति भवन छाडेर प्रम ओली भुजतिर

23th February 2016 | ११ फागुन २०७२ |

**नयाँ दिल्ली** : भारतको औपचारिक भ्रमणमा आएका प्रधानमन्त्री केपी शर्मा ओली अहिले बिहानै गुजरातको भुजतिर जाँदैछन्।

उनका राजनीतिक सल्लाहकार विष्णु रिमालले भुज यात्राका लागि राष्ट्रपति भवन छाड्दै गरेको जानकारी गराएका छन्। भारत भ्रमणमा गएदेखि नै ओली र उनकी टिमलाई राष्ट्रपति भवनमा सत्कारसहित राखिएको थियो।

रिमालले भ्रमण टोलीलाई दिइएको सत्कारको धन्यवादसमेत दिएका छन् माइक्रो ब्लगिङ साइट ट्विटरमार्फत्।

*भूजतर्फको यात्राको लागि राष्ट्रपति भवन छोड्दै, प्रम ओलीको भ्रमण टोलीलाई प्रदान गरिएको सत्कारको लागि हार्दिक धन्यवाद!*

*— Bishnu Rimal (@BishnuRimal)* *February 23, 2016*

हिजो दिनभरि पूरै व्यस्त रहेका ओली आज पनि बिहानैदेखि सक्रिय भएका छन। उनी भुकम्प प्रभावित भुजमा भएको पुनर्निर्माणको अवलोकन गर्ने कार्यक्रम छ।

# सुषमा दिदीले ओली भाइलाई पढाएको 'ब्रदर डिप्लोमेसी'

23th February 2016 | ११ फागुन २०७२ |

- **उमेश श्रेष्ठ-**

**नयाँ दिल्ली :** हिन्दीमा भाइ शब्दको अर्थ बडा भाइ र छोटा भाइ दुवै हुन्छ। भैया त नेपालीहरुले चलाउने शब्द हो। भारतमा त अपरिचितलाई पनि भाइसाहब भनिन्छ।

भारतीय विदेश मन्त्री सुषमा स्वराजले सोमबार प्रधानमन्त्री केपी ओलीलाई छोटा भाइ भन्दै नाता लगाइन्। सप्रु हाउसमा कुटनीतिज्ञहरुलाई सम्बोधन गर्ने कार्यक्रमको अध्यक्षता गरिरहेकी सुषमाले प्रम ओलीको जन्मदिन आजै परेको जानकारी दिइन्। त्योसँगै उनले आफू ओली भन्दा केही दिनले जेठी रहेकीले 'बडे भाइकी बडी बहन के नाते' शुभकामना दिइन्।

भारतले बिग ब्रदर एटिच्युड राख्यो भनी आलोचना भइरहेको बेला भारतीय विदेशमन्त्री सुषमा स्वराजले केही महिनाअघि राज्यसभामै जवाफ दिएकी थिइन्- पश्चिमी मान्यता र पूर्वीय मान्यतामा फरक छ। बिग ब्रदर अहंकारी हुन्छ, एल्डर ब्रदर सरोकारी हुन्छ। भारत बिग हैन एल्डर ब्रदर हो नेपालको- ठिक त्यही शब्द उनले यहाँ पनि दोहोऱ्याइन्।




शब्दजालमा भुलाउन माहिर भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीको कोर टिमको एक खम्बा सुषमाले प्रम ओलीलाई भाइ बनाउनुको लाक्षणिक अर्थ पनि छ। बिग ब्रदर मान्यताको उनले खण्डन गरेपनि पूर्वीय समाजमा सानो भाइ हुनुको अर्थ स्पष्ट छ। सानो भाइको काम ठूलो दाइको कुरा खुरुखुरु मान्नु हो। प्रश्न नगर्नु हो। रामायणमा लक्ष्मण ठूल्दाजु रामको आदेश अनुसरण गर्दै जंगल गए। अर्को भाइ भरतले म राज्य चलाउँदिन भन्दा पनि रामले चलाऊ भनेपछि खराउ गद्दीमा राखेर भएपनि राज्य चलाउनै पऱ्यो।

महाभारतमा ठूल्दाजु युधिष्ठिरको आदेश अगाडि यति निरिह थिए अरु पाण्डवकी साझा पत्नीलाई जुवामा दाउमा राख्दा पनि विरोधको एक स्वर निकाल्न सकेनन्। बरु पश्चिमी समाजमा दाइको कुरा तर्कहिन लागे प्रतिवाद गरिन्छ तर पूर्वीय समाजमा त्यस्तो छैन।

हिन्दु राष्ट्रवादी नारा घन्काउने मोदी सरकारको मुखले ओली भारत भ्रमणमा आएकै बेला ब्रदर डिप्लोमेसी अपनाउनुको लाक्षणिक अर्थ पक्कै पनि हुनुपर्छ। कार्यक्रमको क्रममा सुषमा दिदीकै हैसियतमा देखा परिन्। प्रधानमन्त्री ओलीले लिखित लेक्चर पढिसिध्याए लगत्तै प्रश्नोत्तर सुरु भयो।

दर्शकदीर्घाबाट चार वटा प्रश्न आए। प्रश्न सकिएपछि सुषमाले भर्खरै भाइ नाता लगाएकी प्रम ओलीलाई निर्देशनात्मक पाराले केही भन्दै गरेको दर्शक दीर्घाबाट प्रष्टै देखिन्थ्यो। सुषमाले बोलिरहेकी थिइन्, प्रम ओली टाउको हल्लाइरहेका थिए। प्रमले कागजमा केही लेखे पनि। दिदीकै पारामा सुषमा केही सम्झाइरहेकी थिइन्। अनि प्रम ओलीले माइक अगाडि सारे र बोल्न थाले।




प्रधानमन्त्री ओलीको ती भनाइहरु भने नेपालको संविधानमा रहेका मिसअन्डरस्ट्यान्डिङ हटाउने विषयमा लक्षित थियो। उनै सुषमाले केही अघि राज्यसभामा भारतबाट बिहे गरी नेपालमा जाने महिलाले नागरिकता नपाउने विषय उठाएकी थिइन्। उनकै अगाडि ओलीले तीन महिनामा ५९६ र चौथो महिनासम्म पुग्दा १०७५ भारतीय महिलाले नागरिकता पाइसकेको तथ्याङ्क अघि सारे।

संघीय कानुन बमोजिम नागरिकता दिने विश्वभरको प्रचलन रहेको स्मरण गराउँदै उनले भने, 'विश्वभर नै केन्द्रीय सरकारले केन्द्रीय कानुनबाट नागरिकता दिने हो, यो अधिकार हामी प्रान्तलाई दिन सक्दैनौँ। उनले भारतबाटै आन्ध्र प्रदेश टुक्रिएर तेलङ्गाना राज्य बनेको उदाहरण दिँदै संघीय प्रदेशको संख्या र सीमाङ्कन परिवर्तन भइरहने बताए। तर के भाइको यो कुरा सुन्न 'दिदी' र 'ठूल्दाइ' तयार छन् त?

दिल्ली छाडेर प्रम ओली गुजराततर्फ, के के छ उनका कार्यक्रम?
**काठमाडौं :** भारत भ्रमणको पाँचौं दिन प्रधानमन्त्री केपी ओलीको ६ वटा कार्यक्रम तय भएका छन्। आज नयाँदिल्ली छाड्ने प्रधानमन्त्री टोली गुजरात र मुम्बइ पुग्नेछ।

आजको भ्रमण गुजरात राज्यका भूकम्पबाट क्षतिग्रस्त संरचनाको पुनर्निर्माण र पीडितहरुको पुनर्स्थापनाको मोडलको अवलोकन प्रधानमन्त्री ओलीको प्राथमिकतामा छ।

प्रधामन्त्री ओलीले मंगलबार बिहान करिब साढे ६ बजे गुजरातको भुजतर्फ जान राष्ट्रपति भवन छोडेका थिए।

ओली बिहान पौने १० वजे होटल रेगेन्ता रिसोर्टमा गुजरात सरकारले गरेको कार्यक्रममा सहभागी हुनेछन्।

बिहान साढे ११ बजे प्रधानमन्त्री सहितको नेपाली टोलीले भीमासारमा रहेको पुनर्स्थापना वस्तीको अवलोकन गर्नेछन्। त्यहाँ स्थानीय वासिन्दाको धारणा बुझ्ने कार्यक्रम पनि तय भएको नेपाली दूतावासले जानकारी दिएको छ।

त्यसपछि सवा १ बजे प्रधानमन्त्री ओली अर्को पुनर्स्थापना वस्ती मुन्द्राको अवलोकन गर्ने कार्यक्रम छ। प्रधानमन्त्री आजै ४ बजे मुम्बईतर्फ प्रस्थान गर्ने कार्यक्रम छ। उनले साढे ७ बजे राजभवनमा महाराष्ट्रका गभर्नरसँग भेट गर्ने कार्यक्रम तय भएको नेपाली दूतावासले जनाएको छ।

# फोटोमा हेर्नुस्, प्रधानमन्त्री ओलीलाई गुजरातमा स्वागत

23th February 2016 | ११ फागुन २०७२ |

**काठमाडौं :** प्रधानमन्त्री केपी शर्मा ओली भारतको नयाँ दिल्लीबाट मंगलबार बिहान गुजरात पुगेका छन्।

छ दिने राजकीय भ्रमणका लागि भारत गएका प्रधानमन्त्री ओली भूकम्प गएको भुज क्षेत्र लगायत गुजरातका विभिन्न भागको अवलोकन गर्ने सन्दर्भमा त्यहाँ पुगेका हुन्।

प्रधानमन्त्री ओलीलाई गुजरातका गभर्नर ओपी कोह्लीले भुज विमानस्थलमा स्वागत अभिवादन गरेका छन्।

## हेर्नुस् गुजरातमा प्रधानमन्त्री ओलीलाई गरिएको स्वागत






# प्रमद्वारा भुजमा भूकम्पपछिको पुनःनिर्माणको अवलोकन, के सिक्न सक्छ नेपालले?

23th February 2016 | ११ फागुन २०७२ |

- **प्रकाश सिलवाल-**

**गुजरात** : प्रधानमन्त्री केपी शर्मा ओलीले आफ्नो राजकीय भ्रमणको पाँचौं दिन आज गुजरात प्रान्तको भुजस्थित भीमासागर क्षेत्रमा भूकम्पपछिको पुनःनिर्माण र नयाँ बस्ती विकास क्षेत्रको अवलोकन गरेका छन्।

दुई वर्षअघि र सन् २००१ मा सो क्षेत्रमा गएका भूकम्पबाट भएको क्षति र पुनःनिर्माणको जानकारी लिन प्रधानमन्त्री यहाँ आइपुगेका हुन्।

प्रधानमन्त्रीका साथ भ्रमण दलका अन्य सदस्य पनि सहभागी थिए। प्रधानमन्त्री ओलीसमक्ष सो प्रदेशका गभर्नर ओपी कोह्लीलगायतले पुनःनिर्माण कार्यक्रमबारे अवगत गराएका थिए।

सो क्षेत्रमा विपद् व्यवस्थापन समिति र पुनःनिर्माण प्राधिकरणले गरेका कार्यबाट विगतको भन्दा राम्रो

विकास निर्माण भएको पाइएको छ। स्थानीय अधिकारीका अनुसार नयाँ जग्गा वितरण गरी बस्ती निर्माण, उद्योग कलकारखानाको निर्माण, वैदेशिक सहयोग परिचालन, शिक्षालय, स्वास्थ्य केन्द्र, भूकम्पमापन केन्द्र, पुस्तकालय आदिको निर्माण गरिएको छ।

नेपालमा पनि गत वैशाख १२ मा भूकम्प गएपछि पुनःनिर्माणको क्रम चलिरहेका बेला सरकारका विभिन्न मन्त्री, सांसद्, मुख्य सचिव, राष्ट्रिय पुनःनिर्माण प्राधिकरणका प्रमुख कार्यकारी अधिकृतसहितको टोली सो क्षेत्रमा पुगेको हो। प्राधिकरणका प्रमुख कार्यकारी सुशील ज्ञवालीले भुजको पुनःनिर्माण तुलनात्मकरुपमा चाँडो भएको पाइएबाट नेपालले पनि पाठ सिक्न सक्ने बताए।

सन् २००१ मा भुजको कुच जिल्लामा ७.९ म्याग्निच्युडको भूकम्पबाट १८ हजार छ सय मानिसको मृत्यु भएको थियो।

यसअघि, प्रधानमन्त्री ओलीलाई भुज विमानस्थलदेखि स्थानीय रिजेन्ता रिसोर्टसम्म पंक्तिबद्ध राजनीतिक कार्यकर्ता, जनता र विद्यार्थीद्वारा विभिन्न झाँकी, नृत्य, खादा र पुष्पाहारबाट भव्य स्वागत गरिएको थियो।

गुजरात प्रस्थान गर्नुअघि ओलीलाई भारतीय आयुष राज्यमन्त्री श्रीपद् यश्व नायकले नयाँ दिल्लीको सैनिक विमानस्थलमा विदाई गरेका थिए। प्रधानमन्त्री ओली आजै साँझ भारतको मुम्बई सहर पुग्ने कार्यक्रम रहेको छ। रासस

फोटोमा हेर्नुस्, भुजमा प्रधानमन्त्रीको यसरी भयो स्वागत
**गुजरात :** प्रधानमन्त्री केपी शर्मा ओलीले आफ्नो राजकीय भ्रमणको पाँचौं दिन आज गुजरात प्रान्तको भुजस्थित भीमासागर क्षेत्रमा भूकम्पपछिको पुनःनिर्माण र नयाँ बस्ती विकास क्षेत्रको अवलोकन गरेका छन्।

दुई वर्षअघि र सन् २००१ मा सो क्षेत्रमा गएका भूकम्पबाट भएको क्षति र पुनःनिर्माणको जानकारी लिन प्रधानमन्त्री यहाँ आइपुगेका हुन्।



प्रधानमन्त्री ओलीलाई भुज विमानस्थलदेखि स्थानीय रिजेन्ता रिसोर्टसम्म पंक्तिबद्ध राजनीतिक कार्यकर्ता, जनता र विद्यार्थीद्वारा विभिन्न झाँकी, नृत्य, खादा र पुष्पाहारबाट भव्य स्वागत गरिएको थियो।

गुजरात प्रस्थान गर्नुअघि ओलीलाई भारतीय आयुष राज्यमन्त्री श्रीपद् यश्व नायकले नयाँ दिल्लीको सैनिक विमानस्थलमा विदाई गरेका थिए। प्रधानमन्त्री ओली आजै साँझ भारतको मुम्बई सहर पुग्ने कार्यक्रम रहेको छ। रासस





# पुनःनिर्माणमा आत्मबल बढ्यो–प्रधानमन्त्री ओली

23th February 2016 | ११ फागुन २०७२ |

**गुजरात :** भारतको राजकीय भ्रमणमा रहेका प्रधानमन्त्री केपी शर्मा ओलीले गुजरातको भुजस्थित भूकम्पपछिको पुनःनिर्माण कार्यले नेपालको पुनःनिर्माण गर्ने कार्यमा आत्मबल बढेको बताएका छन्।

भूकम्पपछि पुनः निर्माण भएको भुज सहरको अवलोकनपछि उनले नेपालमा पनि भूकम्पपछिको पुनःनिर्माणका लागि थप आत्मबल बढेको बताएका हुन्। सन् २००१ मा भूजमा गएको भूकम्पले सो सहरलाई पूर्ण रुपमा क्षति पुऱ्याएको थियो ।

भुजका स्थानीयवासिन्दा र सञ्चारकर्मीसँग कुरा गर्दै प्रधानमन्त्री ओलीले दृढताका साथ मिलेर काम गरेमा पनि निर्माण सम्पन्न गर्न सकिदोरहेछ भन्ने उदाहरण यहाँ देखिएको वताए। उनले नेपालको भूकम्पपछिको पुनःनिर्माणमा भारतको उलेख्य सहयोग रहेको र आगामी दिनमा पनि त्यस्तै सहयोग रहने विश्वाससमेत व्यक्त गरे।

प्रधानमन्त्री ओलीले नेपाल आकारमा सानो भए पनि विविधतायुक्त देश भएकाले यसको समृद्धि र पुनःनिर्माणका लागि भारतजस्ता अन्य मुलुकबाट आगामी दिनमा निरन्तर सहयोग हुने आशा व्यक्त गरे। रासस

# गुजरातबाट मुम्बईतिर प्रम ओली

23th February 2016 | ११ फागुन २०७२ |

**गुजरात :** भारतको राजकीय भ्रमणमा रहेका प्रधानमन्त्री केपी शर्मा ओली भुजस्थित भूकम्प पुनःनिर्माणको अवलोकनपछि गुजरातबाट आज मुम्बई तिर लागेका छन्।

प्रधानमन्त्री ओलीले भूकम्प गएको भुज क्षेत्रलगायत गुजरातका विभिन्न भागको अवलोकन गरी अहिले

मुम्बई गएका हुन्।

प्रधानमन्त्री ओलीलाई गुजरातका गभर्नर ओपी कोहलीले भुज विमानस्थलबाट विदाई गरे। प्रधानमन्त्री ओली आज बिहान भारतको नयाँ दिल्लीबाट गुजरात पुगेका थिए। रासस

# प्रम ओलीलाई मुम्बईमा मनिषा कोइरालाको 'हाइ टी'

23th February 2016 | ११ फागुन २०७२ |

- **पहिलोपोस्ट-**

**नयाँ दिल्ली :** भारत भ्रमणमा रहेका प्रधानमन्त्री केपी शर्मा ओलीलाई बलिउड अभिनेत्री मनिषा कोइरालाले हाइ टीको आयोजना गरेकी छन्। टाइम्स अफ इन्डियाको अनलाइन संस्करण अनुसार मनिषाले नेपाली दुतावाससँग मिलेर चियापान गर्न लागेकी हुन् ।

उक्त चियापानमा बलिउड अभिनेता ज्याकी श्राफ र निर्देशक सुवास घई समेत उपस्थित हुने जनाइएको छ । ज्याकी र सुवास बलिउडमा मनिषाका निकटवर्ती सेलेव्रिटी हुन् ।

बुधबार हुने चियापानमा बलिउडबाट सहभागि हुने अन्य सेलेब्सको नाम भने खुलाइएको छैन । यतिबेला ओली दुई देशबीच बिग्रिएको सम्बन्ध सुर्धान दिल्ली भ्रमणमा छन् ।

पचास र साठीको दशकमा नेपालमा प्रधानमन्त्री भएका कांग्रेस संस्थापक नेता बीपी कोइरालाकी नातिनी मनिषालाई नेपाल र भारत जोड्ने कलाकार मानिन्छ ।

# मुम्बईमा प्रम ओलीलाई मन्त्री टावडेको स्वागत

23th February 2016 | ११ फागुन २०७२ |

**मुम्बई :** भारतको राजकीय भ्रमणका क्रममा प्रधानमन्त्री केपी शर्मा ओली गुजरातबाट मुम्बई पुगेका छन्। राष्ट्रपति भवनबाट विदाइ भएर गुजरात पुगेका ओली आज मुम्बईमा रात बिताउँदैछन्।

प्रधानमन्त्री ओलीलाई मुम्बईस्थित छत्रपाटी शिवाजी अन्तर्राष्ट्रिय विमानस्थलबाट मानव संशाधन मन्त्री विनोद टावडेले स्वागत गरे। उनी भूकम्प गएको भुज क्षेत्रलगायत गुजरातका विभिन्न भागको अवलोकन गरी अहिले मुम्बई पुगेका हुन्।

प्रधानमन्त्री ओलीलाई गुजरातका गभर्नर ओपी कोहलीले भुज विमानस्थलबाट बिदाई गरेका थिए। रासस

# प्रधानमन्त्री ओली भावुक भएपछि...

23th February 2016 | ११ फागुन २०७२ |

**गुजरात :** स्थानीय भुजवासीले आत्मीय र भव्य स्वागत गरेपछि राजकीय भ्रमणमा रहेका प्रधानमन्त्री केपी शर्मा ओली पनि सायद भावुक भए। उनलाई स्वागत गर्न भूकम्पपछि पुनःस्थापना गरी पुनःनिर्मित एक सामुदायिक भवनमा खचाखच मानिसको उपस्थितिमा उनले गुजरातको स्वागतलाई असाधारण भने।

भारतीय प्रधानमन्त्री नरेन्द्र मोदी दुईपटक मुख्यमन्त्री भएको सो प्रदेशमा ओली हिँड्ने बाटाका दुवैतिर दुई देशका झन्डासहित स्थानीय उभिएका थिए भने सडकका खम्बा र भित्तामा दुई प्रधानमन्त्रीका तस्बिर र स्वागतका तुल टाँगिएका थिए। स्वागतको संस्कार पनि नेपालीको जस्तै देखिन्थ्यो। प्रधानमन्त्री ओलीले आफू त्यो प्यार र मित्रताको ऋणी भएको बताए।

उनले भने– "मैले शान्तिदूत बुद्धको सन्देश, पशुपतिको प्रसाद र आशीर्वाद लिएर आएको छु, तपाईंहरुको सफल र प्रेरक पुनःनिर्माण कार्यबाट प्रभावित भएको छु, तपाईंहरुको भलो होस्, हाम्रो मित्रता गाढा होस्।"

ओलीले दुई देशबीचको मित्रता कसैले बनाइदिएको नभएर आफैँ बनेकाले यसलाई कसैले बिगार्न पनि सक्दैन भने। आफ्नो भ्रमणबाट केही समययताको तिक्ततासमेत हटेको उनले स्पष्ट गरे। रासस

# प्रम ओलीको भारत भ्रमणमा मोदीका ४ ट्विट, २ व्यक्तिगत र २ विषयगत

24th February 2016 | १२ फागुन २०७२ |

**नयाँ दिल्ली :** प्रधानमन्त्री नरेन्द्र मोदी सूचना प्रविधिमा अब्बल छन्। चुनावी अभियानदेखि कुटनीतिक पहलसमेत उनी सामाजिक सञ्जालको सहारामा भ्याइदिन्छन्। आफू सहभागी भएका ठाउँ र यात्राका क्रममा ट्विटिन्छन् र धारणा सार्वजनिक गर्न पनि भ्याउँछन्। कुटनीतिक सम्बन्धलाई पनि ट्विटरबाटै जोड्ने उनको खुवी कहिलेकाही विवादको घेरामा पनि पर्छ।

गत वैशाख १२ गते नेपालमा भूकम्प गएलगत्तै मोदीले ट्विट गरेर सहयोगको अभियान थालेका थिए। ट्विटमा सक्रिय नरेन्द्र मोदीले नेपालका प्रधानमन्त्री केपी शर्मा ओलीको भारतको राजकीय भ्रमणलाई कसरी प्रस्तुत गरे त? उनका ट्विटका आशय के थिए? हामीले प्रधानमन्त्री ओलीको दिल्ली यात्र सुरुदेखि दिल्लीबाट गुजरात हुँदै मुम्बई पुग्दासम्म मोदीले गरेका ट्विटमा एक नजर लगायौं।

## मोदीको ट्विट कुटनीतिमा प्रम ओली

कुटनीतिलाई प्रविधिबाट जोड्न खप्पिस भारतीय प्रधानमन्त्री नरेन्द्र मोदीले नेपालका प्रधानमन्त्री केपी शर्मा ओलीको भ्रमणका विषयमा भने धेरै ट्विट गरेनन्। अफगानिस्तानका राष्ट्रपति असरफ घानीलाई जन्मदिन नै नभएको दिन जन्मदिनको शुभकामना दिएका कारण उनीमाथि निक्कै व्यङ्ग्य पनि भयो। नेपाल र भारतबीच चिसिएको सम्बन्धलाई सुधार्ने मिसनमा भारत भ्रमणमा गएका नेपालका प्रधानमन्त्रीलाई मोदी सरकारले राष्ट्रपति भवनमा भव्यताका साथ राख्यो। सम्मान पनि दियो। तर, ओलीको माइक्रो ब्लगिङलाई निहाल्ने हो भने त्यो सम्मानका संकेतहरु मोदीका ट्विटमा भने झल्किएन।

मोदीले ट्विटबाट प्रधानमन्त्री ओलीलाई स्वागत गरे। प्रम ओली र उनकी पत्नीको भारत भ्रमणलाई 'वन्डरफूल' भन्दै ट्विट गरेका मोदीले त्यसपछि भ्रमणका विषयलाई सामाजिक सञ्जालमा उतार्न चाहेनन्। अन्य समय र अन्य नेताको भ्रमणमा मोदी जति ट्विटिन्थे त्यति प्रम ओलीको भिजिटमा उनका टिप्पणीहरु सामाजिक सञ्जालमा आएनन्। उनले ओलीको आगमनको स्वागत गर्दै ट्विट गर – भारत भ्रमणमा प्रधानमन्त्री ओली र उनकी पत्नीलाई पाउँदा अत्युत्तम लागेको छ। यो भ्रमणले भारत-नेपालको सम्बन्ध थप कसिलो हुनेमा विश्वस्त छु।

*Wonderful to have PM Oli and his wife visit India. Am sure this visit will strengthen India-Nepal ties. pic.twitter.com/3M1EciEzEq*

*— Narendra Modi (@narendramodi) February 20, 2016*
नेपालमा भारत विरोधी जनमत बनेकोमा भारतीय पक्ष सधै सचेत रहँदै आएको छ। उनीहरु सार्वजनिक मञ्चमा नै नेपालमा भारत विरोधी गतिविधि भइरहेको बताउँदै आएका छन्। अघोषित रुपमा लामो समय कायम भएको नाकाबन्दीको विषय पनि धेरैको चासोको विषय थियो। नेपालको संविधानमा भारतको 'हस्तक्षेप'माथि आउने टिप्पणीप्रति पनि धेरै प्रतीक्षारत थिए। ती विषयमा मोदीले कुनै ट्विट गरेनन्। विवादका विषयलाई ट्विटबाट टाढै राखेका मोदीले प्रधानमन्त्री ओलीसँग भेट भएको विषय भने माइक्रो ब्लगिङबाट सार्वजनिक गरे। 'भारत-नेपाल सम्बन्धि सबै विषयमा मैले र प्रधानमन्त्री ओलीले आज विस्तारमा कुराकानी गर्‍यौं,' मोदीले ट्विटमा भने।

*भारत-नेपाल संबंधों के सभी पहलुओं पर मैंने और प्रधान मंत्री ओली ने आज विस्तार से बात की है। pic.twitter.com/VpFxTYroNN*

*— Narendra Modi (@narendramodi) February 20, 2016*

विस्तारमा कुराकानी भएको मोदीले जानकारी गराए पनि कुन विषयमा केकस्ता कुराकानी भए उनले खुलाएनन्। प्रधानमन्त्री केपी शर्मा ओलीलाई नेपाली दूतावासमा सोधिएको प्रश्न थियो – वन टू वन मिटिङमा मोदीसँग के कुरकानी भयो? प्रत्युत्तरमा ओलीले छलफलको कुनै पनि विषयलाई सार्वजनिक गर्न चाहेनन्। वान टू वानमा भएको कुराकानीलाई उनले वान टू वानमै सीमत गरे।

प्रधानमन्त्री ओलीसँग जोडेर दुई ट्विट गरेका प्रधानमन्त्री मोदीले गरेको तेस्रो ट्विटमा भारत र नेपाल दुवै सम्प्रभुत्व मुलुक भएको र यी दुई मुलुकबीच घनिष्ट एवम अद्‌वितीय सम्बन्ध रहेको उल्लेख गरे।

*भारत और नेपाल दो संप्रभुत्व देश है। इन की मित्रता घनिष्ट एवम अद्‌वितीय है।https://t.co/9oUaEkDofy*

*— Narendra Modi (@narendramodi) February 20, 2016*

## जन्मदिनको शुभकामना

भारत भ्रमणमा रहेकै समयमा प्रधानमन्त्री केपी शर्मा ओलीको जन्मदिन पर्‍यो। फेब्रुअरी २२ मा जन्मदिन दिल्लीमै केक काटेर मनाएका ओलीलाई सम्बोधन गर्दै प्रधानमन्त्री मोदीले ट्विट गर्न भुलेनन्। मोदीको स्वास्थ्य र दीर्घायुको कामना गर्दै उनले ट्विट गरेका थिए।

*Wishing the PM of Nepal, Shri KP Oli on his birthday. May Almighty bless him with good health & a long life.*

*— Narendra Modi (@narendramodi) February 22, 2016*

## ओलीको सम्मानमा रात्रीभोज, हाइप्रोफाइल व्यापारीसँगै गायक उदितनारायण झा उपस्थित

23th February 2016 | ११ फागुन २०७२ |

**नयाँ दिल्ली :** भारत भ्रमणमा रहेका नेपालका प्रधानमन्त्री केपी शर्मा र उनकी पत्नी राधिका शाक्यलाई महाराष्ट्रका गभर्नर सी भी राव र मुख्यमन्त्री देवेन्द्र फन्डाविसले मंगलबार राति भव्य स्वागत गरेका छन्।

गभर्नर रावले प्रधानमन्त्री ओली र उनीसँग आएको भ्रमण टोलीको सम्मानमा राज भवनमा रात्री भोजको आयोजना गरेका थिए।

रात्रीभोजमा मुख्यमन्त्री फन्डाविसकी पत्नी अमुर्ता, महाराष्ट्रका अर्थ मन्त्री सुधिर मुङ्वन्तिअर, व्यवसायी तथा समाजसेवी राजश्री विरला, एस रामादोरी र गायक उदित नारायण झा पनि सहभागी रहेको विजनेस स्ट्यान्डर्डले जनाएको छ।

## बलिउड कलाकारलाई भेट्दै प्रधानमन्त्री, आज साँझ स्वदेश फर्किने

24th February 2016 | १२ फागुन २०७२ |

**नयाँदिल्ली** - ६ दिने भारत भ्रमण सकेर प्रधानमन्त्री केपी ओली बुधबार स्वदेश फर्किदैछन्।

आज पनि भारतमा प्रधानमन्त्री ओलीको दिनभरीको कार्यक्रम तय भएको छ। उनी साँझमात्र काठमाडौं फर्किनेछन्। प्रधानमन्त्रीले साँझ ८ बजे त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलमा पत्रकारहरुलाई आफ्नो भारत भ्रमणबारे जानकारी गरउन तय भएको छ।

नयाँदिल्लीस्थित नेपाली दूतावासले दिएको जानकारी अनुसार मुम्बइमा रहेका प्रधानमन्त्री ओली बिहान साढे ८ बजे मुम्बइको औद्योगिक पार्क भ्रमणमा गएका छन्। प्रधानमन्त्री १ बजेसम्म त्यस क्षेत्रको अवलोकनमै हुनेछन्।

१ बजे उनले मुम्बइको ब्यापारिक समुदायसँग लञ्च गर्ने कार्यक्रम रहेको छ। प्रधानमन्त्री ओलीले दिउँसो ३ बजे मनिषा कोइराला लगायतका बलिउड कलाकारसँग पनि भेट गर्ने कार्यक्रम रहेको नेपाली दूतावासले जानकारी दिएको छ। उनी ५ बजे नेपालका लागि उड्ने दूतावासले जनाएको छ।

फागुन ७ गते साँझ दिल्लीको राजकीय भ्रमणका लागि गएका ओलीले भारतका राष्ट्रपति प्रणव मुखर्जी, उपराष्ट्रपति हमिद अन्सारी, प्रधानमन्त्री नरेन्द्र मोदी, मन्त्रीहरु, बिभिन्न दलका नेताहरु,ब्यापारिक समुदायसँग भेट गरेका थिए। त्यस्तै उनको भारत भ्रमणको क्रममा भारतसँग नेपालको पुनर्निर्माणमा सघाउने, उर्जा ब्यापार लगायतका महत्वपूर्ण ९ बुँदे सम्झौता पनि भएको छ।

प्रधानमन्त्रीले भारतको तेहरी बाँध र भूकम्पपछि पुनर्निर्माण गरिएको गुजरातको भुज क्षेत्रको अवलोकन पनि गरे। उनले भारतको कुटनीतिक र ब्यापारिक समुदायलाई पनि संबोधन गरेका थिए। भारतसँग देखिएको असमझदारी हटाउन भ्रमण सफल रहेको प्रधानमन्त्री ओलीले दावी गरेका छन्।

# प्रधानमन्त्री ओलीले काठमाडौं ओर्लिनासाथ भने: सम्बन्धमा अब तुसारो पर्दैन

24th February 2016 | १२ फागुन २०७२ |

- **रविराज बराल/पहिलोपोस्ट-**

**काठमाडौं :** प्रधानमन्त्री केपी शर्मा ओलीले नेपाल-भारत सम्बन्धमा देखिएको तुषारो हटेको विश्वास व्यक्त गरेका छन्। छिमेकी मुलुक भारतको ६ दिने राजकीय भ्रमण पूरा गरी बुधबार राति स्वदेश फर्किएका प्रधानमन्त्री ओलीले आफ्नो भारत भ्रमण पूर्ण रुपमा सफल भएको दाबी गर्दै आउँदा दिनमा असमझदारी नआउने विश्वास आफूले लिएको बताए।

'भ्रमण पूर्ण रुपमा सफल भएको छ। कतिपय कारणले बिचमा सम्बन्धमा केही तुषारो परेजस्तो देखिए पनि अब त्यसप्रकारको हुने छैन भन्ने मैले ठानेको छु', त्रिभुवन विमानस्थलको अति विशिष्ट कक्षमा आयोजित पत्रकार सम्मेलनमा प्रधानमन्त्री ओलीले भने, 'मैले त्यसै प्रकारको मित्रताको भावना भारतबाट पनि प्रदशित भएको छु।'

भारतमा अत्यन्तै आत्मीय मित्रता पाएको ओलीले बताए। 'हामीलाई सम्माननीय राष्ट्रपति ज्यूले आफ्नो अतिथिको रुपमा राष्ट्रपति भवनमा नै रहनका निम्ति सम्मानपूर्ण ढंगले आमन्त्रण गर्नुभयो', प्रधानमन्त्रीले भने, 'हाम्रा निम्ति जुन स्वागत र आतिथ्य भारतबाट प्रकट भयो, मैले त्यसलाई सम्पूर्ण नेपाल र नेपालीप्रतिको सम्मानको रुपमा लिएको छु।'

दिल्ली जानुअघि नै आफ्नो भ्रमणको उद्धेश्य दुई देशबिच देखिएको असमझदारी हटाउनु रहेको बताएका ओलीले 'भ्रमण दुई देशका बिचमा देखिएको अनावश्यक असमझदारी हटाउनमा केन्द्रित रहेको' बताए। उनले भारतमा रहँदा नै त्यो असमझदारी हटेको दाबी गरेका थिए।

'केही समययता नेपाल र भारतका बिचको ऐतिहासिक र लामो समयको पुरानो मैत्री सम्बन्धमा कतिपय असमझदारीका पक्षहरु देखा परेका थिए, जसलाई हटाउनु जरुरी थियो। त्यसका निम्ति हामी प्रयास गरिरहेकै थियौं', उनले भने, 'असमझदारीलाई हटाएर सम्बन्धलाई मित्रताको पहिलेकै अवस्थामा पुर्‍याउनु र आजको आवश्यकता अनुसार अघि बढाउनु दुई देशको हित, उन्नति र सहकार्यका निम्ति मित्रतालाई अझ ब्यापक बनाएर लानु जरुरी थियो। तद्अनुसार नै हामीले भारतको भ्रमण गर्‍यौं। हाम्रा निम्ति पनि यो महत्वपूर्ण थियो। दुबैदेशका निम्ति यो महत्वपूर्ण रह्यो।'



**प्रधानमन्त्रीले भने-**

१. भारतमा भारतका प्रधानमन्त्री नरेन्द्र मोदीजीसँग व्यक्तिगत तवरमा पनि र प्रतिनिधिमण्डलको रुपमा पनि कुराकानीहरु भए। त्यसमा परस्परको सम्मान, पारस्पारिक हित, मित्रताका आवश्यकता र तिनलाई अगाडि बढाउने प्रशंगमा व्यवहारिक रुपमा कसरी अगाडि बढाउन सकिन्छ तत् सम्बन्धमा पनि कुराकानीहरु भए।

२. संविधानसभामार्फत लोकतान्त्रिक विधिबाट संविधान निर्माण भएको कुरालाई भारतको राजनीतिक नेतृत्वलाई बतायौं। त्यहाँको बौद्धिक क्षेत्रलाई पनि यसबारे बतायौं। संविधान निर्माणका क्रममा र त्यसपछि देखा परेका केही असन्तुष्टिजन्य कुराहरुलाई वार्ता सम्बादका माध्यमबाट समाधान गर्न सकिन्थ्यो र गर्नुपर्छ। हाम्रा बिचमा जस्तासुकै मतभेद भए पनि त्यसैमा सधैँ अल्झिएर बस्ने कुरा होइन। विचार, तथ्य, तर्क र औचित्यका आधारमा आम जनताको र राष्ट्रहितको पक्षलाई सर्वोपरी राखेर सम्वादबाट समाधान गर्नुपर्छ। यस पक्षलाई ध्यानमा राखेर हामीले संविधान संशोधन पनि गऱ्यौं। र, माननीय उपप्रधानमन्त्री कमल थापाको संयोजकत्वमा ११ सदस्यीय राजनीतिक समिति पनि बनायौँ जसले सीमाकंन लगायतका प्रश्नहरुमा अध्ययन गरेर छलफल गर्छ। त्यसलाई अब पूर्णता दिने छौं। यसबारेमा पनि भारतमा रहँदा चर्चा भयो।

३. भारतका प्रधानमन्त्री नरेन्द्र मोदी र अरु नेताहरुले नेपालमा संविधानसभाबाट संविधान जारी हुनु नेपालको लोकतान्त्रिक आन्दोलनको इतिहासमा अत्यन्तै ठूलो महत्वको उपलब्धिको विषयको रुपमा चर्चा गर्नुभयो। त्यसलाई उहाँहरुले स्वागत गर्नुभयो। सफलता प्राप्त गरेकोमा नेपालको राजनीतिक नेतृत्वको सुझबुझ र सफलताका निम्ति बधाई पनि दिनुभयो।

४. कतिपय लामो समयदेखि चर्चामा रहेका तर नसल्टिएका विषयहरुलाई उपयुक्त विधिबाट उपयुक्त ढंगले

ठोस रुपमा छलफल गरेर टुंग्याउन सकिन्छ र टुंग्याउने बाटोमा अघि बढ्नुपर्छ भनेर यी प्रश्नहरुलाई पनि अगाडि बढायौँ। सीमाका प्रश्नहरु, कालापानीका प्रश्नहरु, सुस्ताका प्रश्नहरु, अथवा सीमा क्षेत्रमा बाँधिएका बाधहरुबाट नेपालमा डुबान भएका प्रश्नहरु जस्ता कुराहरु वा १९५० को सन्धिका प्रश्नहरु जो विभिन्न समयमा चर्चा हुने गरेका छन् तर तिनीहरुको समाधान भएको छैन। बास्तवमा यतिबेला हाम्रो भ्रमणकै बेला यी सबै कुराहरुको छिनोफानो सम्भव पनि थिएन। त्यसकारण हामीले यी प्रश्नहरुमा छलफल गरेर उपयुक्त ढंगले आगामी दिनमा टुंग्याउने विषय हो र टुंग्याउनुपर्छ भन्ने चर्चा गर्‍यौँ र टुंग्याउने सम्बन्धमा उहाँहरुको पनि सकारात्मक दृष्टिकोण रहेकै छ।

## प्रम ओली स्वदेश आगमनका पाँच दृष्य

24th February 2016 | १२ फागुन २०७२ |

**काठमाडौं :** प्रधानमन्त्री केपी शर्मा ओली छिमेकी मुलुक भारतको औपचारिक भ्रमण पूरा गरेर आज राति काठमाडौं आइपुगेका छन्। उनलाई उप प्रधानमन्त्रीहरु विजयकुमार गच्छदार, सीपी मैनाली, चित्रबहादुर केसी लगायत अन्य मन्त्री तथा सरकारी अधिकारीले विमानस्थलमा स्वागत गरे। प्रधानमन्त्रीले भ्रमण सफल भएको जानकारी विमानस्थलमा पत्रकारहरुलाई गराए। हेर्नु प्रम ओली आगमनका पाँच दृष्य :



# ओलीको ६ दिने भारत भ्रमण : दिल्लीमा बादल, काठमाडौंमा झरी



24th February 2016 | १२ फागुन २०७२ |

- **उमेश श्रेष्ठ/पहिलोपोस्ट -**

**नयाँ दिल्ली :** शनिबार बिहान कालो मर्सिडिज बेञ्जमा चढी प्रधानमन्त्री केपी ओली भारतीय राष्ट्रपति भवनमा 'गार्ड अफ अनर' लिन आउँदै गर्दा नयाँ दिल्लीको आकाश धुम्म थियो। घामलाई बादलले छेकेको थियो।

गार्ड अफ अनर सकिएर राजघाट जाँदै गर्दा एक दुई थोपा पानी पनि आकाशबाट वर्षियो। तर त्यो आकाश खुला पार्नका लागि पर्याप्त थिएन।

६ दिने राजकीय भ्रमणमा रहेका बेला पटक-पटक सार्वजनिक कार्यक्रममा प्रधानमन्त्री केपी ओलीले नेपाल र भारतबीच रहेका असमझदारीका बादल हटिसकेको बताए। तर भारतीय पक्षबाट न प्रधानमन्त्री नरेन्द्र मोदी, न विदेश मन्त्री सुषमा स्वराज र न विदेश सचिव एस जयशंकर- कसैले पनि त्यस्तो भनेका थिएनन्।

एकपक्षीय रुपमा असमझदारीको बादल हटेको घोषणा निरर्थक रहेछ भन्ने कुरा भ्रमणको अन्तिम दिन प्रष्टै भयो। मौसम विभागले समेत दिल्लीका बादल नहट्ने घोषणा गरेको दिन राजकीय भ्रमणको अन्त्यमा जारी गरिने संयुक्त वक्तव्य संविधानलाई 'स्वागत' शब्दमा मतभेद भएपछि जारी हुन सकेन। संयोग नै मान्नुपर्छ दिल्लीमा बादल लाग्दा आज काठमाडौंमा पानी नै पर्‍यो।

नेपाली टोलीले स्वागत शब्द विज्ञप्तिमा समावेश गर्न चाहेको थियो। तर भारत त्यसका लागि तयार थिएन।

चौथो दिनपछि नै महत्त्वपूर्ण कार्यक्रम सकिए पनि अनावश्यक रुपमा राजस्थान र मुम्बईको भ्रमण राखेर ६ दिन लम्ब्याइएको राजकीय भ्रमणमा भारतीय विदेश मन्त्रालयको साउथ ब्लकका नेपाल डेस्क हेर्ने अभय ठाकुर पनि सँगै थिए।

बुधबार प्रधानमन्त्रीको औद्योगिक स्थलको भ्रमण गर्ने कार्यक्रम थियो, यता परराष्ट्रका अधिकारीहरु संयुक्त वक्तव्यको भाषामा छलफल गर्दै थिए। 'स्वागत' शब्दमै कुरा नमिलेपछि अभय ठाकुर बिहानै मुम्बईबाट दिल्लीतिर लागेका थिए।

## भ्रमण सफल कि असफल त ?

दुई देशबीच बढेको तनाव कम गर्न सरकार प्रमुख स्तरको कुराकानी हुनु पक्कै पनि सम्बन्ध सहजतिर जाने संकेत हो। यस अर्थमा भ्रमणलाई कम आँक्न मिल्दैन। तर जुन हिसाबले प्रधानमन्त्री ओली र सरकारले असमझदारी हटिसकेको धारणा व्यक्त गर्दै आएका थिए, त्यो अन्ततः प्रत्युत्पादक बन्यो।

हो, दिल्ली पनि तनाव बढोस् भन्ने चाहन्न। तर यसको अर्थ उसले नेपाललाई संविधान संशोधन गर्न बाँकी दुई विषयमा दिँदै आएको दबाबबाट हटेको भने होइन।

नेपालका लागि पूर्व भारतीय राजदूत केभी राजन भन्छन्, 'भ्रमण सम्बन्ध सुधारतर्फ आवश्यक प्रारम्भिक कदम हो। यसले सुरुवाती भिन्नतालाई हटाउन सहयोग गरेको छ। तर अब रियल इस्युमा ध्यान दिने बेला आएको छ।'

सुरक्षा मामिला सम्बन्धी भारतीय थिङ्कट्याङ्क आइडिएसएका निहार नायक पनि यस्तै विचार राख्छन्। उनले पहिलोपोस्टलाई भने, 'दुई देशका बीच रहेको मतभिन्नता घटाउने काम पक्कै भएको छ।'

'संविधान संशोधनमा मधेसीलाई ठीकसँग सम्बोधन गरिएको छैन,' उनी अगाडि भन्छन्, 'जनस्तरमा सम्बन्धमा जुन दरार आएको छ, त्यो कायमै छ।'

उनले लिम्बु, मगर, थारु जस्ता जनजाति पनि असन्तुष्ट रहेको भन्दै मध्यमार्गी शक्तिलाई असन्तुष्ट बनाइराख्ने हो भने कट्टरपन्थी शक्तिहरु अगाडि बढ्ने र त्यसले दुई देशबीचको सम्बन्ध अझ बिग्रन सक्नेतर्फ सचेत गराए।

नेपाल मामिलामा जानकार पूर्व जनरल अशोक मेहता भन्छन्- 'प्रम ओली र भारतको सम्बन्ध सुधारतर्फ अघि बढेको हो तर सम्बन्ध सुध्रन समय लाग्छ। नाकाबन्दी किन भएको भन्ने नेपालीले बुझ्नुपर्छ। त्यसपछि मात्रै यो समस्याको समाधान देखिन्छ।'

प्राध्यापक एसडी मुनि 'ओलीका लागि तीन महिने परीक्षण काल सुरु भएको' मान्न सकिने बताउँछन्। बाँकी विषयलाई उनले दिएका वाचा अनुसार पूरा गरेनन् भने नेपाल र भारतबीचको सम्बन्ध भविष्यमा फेरि बिग्रन सक्ने उनको धारणा छ।

## बाँकी विषय नागरिकता र सीमाङ्कन

चार विषयमा संशोधन गर्न भारतले राखेको चासोमा दुई विषय संशोधनमार्फत् पूरा भइसकेको छ। अब नागरिकता र प्रान्तको सीमाङ्कन बाँकी छ। विषय यिनै दुई हुन् भन्ने किटानी विदेश सचिव जयशंकरले शनिबार आयोजित पत्रकार सम्मेलनमा स्पष्टै राखेका थिए।

उनका अनुसार भारतलाई यस विषयमा तपाईँहरुको चासोमध्ये 'केही सम्बोधन भइसक्यो, केही सम्बोधन हुने क्रममा छ' भनिएको थियो।

सम्बोधन हुने भन्ने विश्वास के त भनेर सोधिएको प्रश्नको जवाफमा विदेश सचिव जयशंकरको भनाई थियो, 'यदि कुनै देशको प्रधानमन्त्रीले आफ्नै देश र अर्को (देश) को सरकारलाई कुनै आश्वासन दिन्छ भने त्यसले नै सबै कुरा बताउँछ। निश्चय पनि सबैले आशा गर्ने विषय हो जस्तोसुकै आश्वासन भए पनि त्यो पूरा गरिनेछ। किनभने यसरी नै अन्तर्राष्ट्रिय सम्बन्धहरु चल्ने हुन्।'

प्रधानमन्त्री ओलीको भ्रमण त्यसअर्थमा 'आफूले भारतलाई दिएका आश्वासन पूरा गर्छु भनी दिएको वचन'लाई दरिलो बनाउने प्रयासमात्रै हो।
काठमाडौँले दिल्लीमा रहेका आशंकाका बादल हटिसक्यो भन्ने दावी गरे पनि त्यो हटिसकेको छैन। बरु प्रधानमन्त्री फर्कने दिन मौसम खराब भएर नेपालमा एउटा ट्विन अटर दुर्घटना भयो। उनको आफ्नै जहाज पनि काठमाडौँमा पानी परेको खबर आएपछि मुम्बईबाट ५० मिनेट ढिला मात्र उड्यो।

स्वघोषित तीन महिनाको समय सीमा ओलीका लागि महत्त्वपूर्ण छ। ढिला भयो भने नि? जवाफ पर्खाइमा छ।